# श्रीबार्हस्पत्य सूत्रम्




## सङ्कलन एवं भावानुवाद : मोहन प्रसाद सापकोटा

## भाषा : संस्कृत-नेपाली

**(sapkotamps731@gmail.com)**

# आधार ग्रन्थ :

## बार्हस्पत्य सूत्रम्
## अर्थात्
## बार्हस्पत्य अर्थशास्त्रम्

BRIHASPATI SUTRA
OR
THE SCIENCE OF POLITICS
ACCORDING TO THE SCHOOL OF BRIHASPATI
EDITED WITH
AN INTRODUCTION AND ENGLISH TRANSLATION
BY
Dr. F. W. THOMAS, M. A.,
LlBRARIAN, INDIA OFFICE LIBRARY, LONDON.
THE DEVANAGARI TEXT
PEEPAEED PEOM
HIS EDITION (IN ROMAN SCRIPT),
WITH
INTRODUCTORY REMARKS AND INDEXES
BY
Pt. Bhagavad Datta, B. A.,
Professor of Sanskrit ftnd SUperintendent, Research Department,
D. A. V, College, Lahore,



PDBLISHBD BY
MOTI LAL BANARSI DASS,
PROPRIETORS
The Punjab Sanskrit Book Depot, Lahore.

1921.

# दुई शब्द

बार्हस्पत्य सूत्रलाई देवगुरु बृहस्पतिको कृति मानिन्छ । यो ग्रन्थको मूलप्रति हालसम्म अप्राप्य छ । ईशाको पाँचौंदेखि आठौं शताब्दीका बीचमा सङ्कलन भएका यो ग्रन्थका केही श्लोक संग्रह गरी १४ औं शताब्दीमा “सर्वदर्शन सङ्ग्रह” नामक ग्रन्थ निस्कन पुग्यो । यसका लेखक सायण थिए । सन् १९२८ मा दक्षिणरञ्जन शास्त्रीले खोजेर जम्मा गरेका साठी श्लोकको एक ग्रन्थ “बार्हस्पत्य सूत्र” लेखे । अहिले जुन् ग्रन्थ बार्हस्पत्य सूत्रका नाममा उपलब्ध छ त्यो पूर्णतः मूल चार्वाक मतबाट भ्रष्ट र अन्दाजमा हालिएका श्लोकहरूको सङ्ग्रह हो भनिन्छ । एउटै मतको समर्थन र खण्डन गरिएको देखिनु यो ग्रन्थ प्रक्षिप्त ग्रन्थ भएको अकाट्य प्रमाण हो ।

यस पुस्तकमा नेपालका बारेमा एउटा सूत्र पाइन्छ । भनिएको छ कि नेपाल एक सय चार योजन (१,२४८-१,५६० कि.मि.) को छ । पुस्तकमा बताइएको यो नापो क्षेत्रफल, लम्बाई वा चौडाई के हो स्पष्ट छैन । तर पनि यहाँ वर्णित अन्य राज्यहरुको विवरण हेर्दा नेपालको आकार चार कुने रहेको भनिएकोले यो क्षेत्रफल नै हो कि भन्ने आधार मिल्दछ । यहाँ उल्लेख गर्नु नै पर्ने कुरा के छ भने तत्कालीन ठूला राज्यमा नेपालको गणना गरिएको छ । भौगोलिक सीमाना फेरबदल भइरहन्छन्, तर पनि हजारौं वर्षअघि नै नेपाल देश रहेको पढ्न पाउँदा आजभोलीको उभयलिङ्गी-राष्ट्रियताको जमानामा पनि मन प्रफुल्ल हुँदो रहेछ ।

धेरैले यसलाई नास्तिक मतको ग्रन्थ हो भनी बताएका छन् । केही सूत्रहरू हेर्दा यो तर्क गलत नभएको प्रमाणित पनि हुन्छ ।  बीचबीचमा थपिएका सूत्रहरूले यो ग्रन्थ आस्तिक हो वा नास्तिक निर्णय गर्न कठिन बनाइदिएको छ । जे होस् यसमा व्यहारोपयोगी धेरै कुराहरू छन् । विशेषतः यो ग्रन्थमा राजनीतिज्ञ व्यक्तिलाई कामलाग्ने कुरा धेरै छन् । यसैले सम्भव भएसम्म सरल भाषामा अनुवाद गर्दै र धेरथोर व्याख्या हाल्दै यो ग्रन्थ हजुरहरूका सामु पस्किएको छु । कतै कतै अल्प ज्ञानका कारण अर्थ लगाउन नसकी लाजै नमानी (?) प्रश्न चिह्न तेर्स्याएर पन्छिएको पनि छु । सानो पुस्तक भउकोले विषयसूची राख्न पनि त्यति उपयुक्त लागेन । आफैंले आफ्ना अन्य गल्ती केलाउन कठिन हुँदो रहेछ । हजुरहरूले औंला ठड्याइ दिए मलाई सुध्रन सहज हुने थियो ।

-भावानुवादक

ॐ

# अथ बार्हस्पत्यसूत्रम्

## अथ प्रथमोऽध्यायः

**बृहस्पतिरथाचार्य इन्द्राय नीतिसर्वस्वमुपदिशति ॥**

आचार्य बृहस्पति यसपछि इन्द्रलाई भएभरका नीतिशास्त्र उपदेश दिनुहुन्छ ।

**आत्मवान् राजा ॥१॥**

राजाले आत्मवान हुनू ।

व्याख्या : **आत्मा परमात्मा ध्येयत्वेन योगक्षेमादिनिर्वाहत्वेन च वर्तते यस्य स आत्मवान् । सर्वकामनापरित्यागेन परमेश्वरमाराधयतो मम स एव देहयात्रामात्रमपेक्षितं सम्पादयिष्यतीति निश्चित्य निश्चिन्तो भवेत्यर्थः । आत्मवानप्रमत्तो भवेति वा ।** मैले होइन गर्ने गराउने सबै ईश्वर हुन्, यो शरीर त उनको कार्य गराउन जन्माइएको साधन मात्र हो भन्ने सोच राखी, निश्चिन्त भएर उन्मत्त नभई कर्म गर्ने व्यक्तिलाई आत्मवान् भनिन्छ । आफ्नो स्वामी आफैं हुनु वा कर्तव्य र अकर्तव्यका सम्बन्धमा आफैं विवेकशील हुनु वा स्वहीतका लागि आत्मचिन्तन गर्ने हुनु पनि आत्मवान हुनु हो । सरल भाषामा भन्नु पर्दा इन्द्रियको वशमा नभएका र आत्माको वशमा भएका व्यक्तिलाई आत्मवान् व्यक्ति भन्ने गरिन्छ । राजाले सरसल्लाह सबैसँग लिनू तर निर्णय लिनुपर्दा आफ्नै आत्मालाई सोधेर लिनू ।



**आत्मवन्तं मन्त्रिणामापादयेत् ॥२॥**

राजाले मन्त्रिहरूमा पनि आत्मवान् व्यक्तिहरूलाई (नै) नियुक्त गर्नू ।

**दण्डनीतिरेव विद्या ॥३॥**

गलत कार्य दण्डित हुने नीतिलाई (राज्य वा सरकारको) आधार नीति बनाउनू ।

**धर्ममपि लोकविक्रुष्टं न कुर्यात् ॥४॥**

धर्मानुकूल वा सत्य नै भएपनि लोकले अस्वीकार गरेको कुरा बलजफ्ती कार्यान्वयन गर्न नखोज्नू ।

## करोति चेदाशास्यैनं बुद्धिमद्भिः ॥५॥

यस्ता लोकलाई मन नपर्ने तर धर्मसम्मत् नीति यदि कार्यान्वयन गर्ने नै हो भने पनि पहिले विद्वान, विशेषज्ञ आदिबाट त्यसलाई अनुमोदन गराउनू ।

## समानैः सेव्यः ॥६॥

राजाले सेवा लिंदा वा गर्दा अथवा आफू अभिनन्दित हुँदा वा अरुलाई अभिनन्दन गर्दा समान स्तर कायम राख्नू ।

व्याख्या : राजा वा राष्ट्रप्रमुखले राम्ररी बिचार नगरी जहाँ जसले जे उद्देश्यले अभिनन्दन गर्न वा सम्मान दिन वा कुनै कामका लागि बोलाए भन्दैमा हतार गर्दै कुदेर पुग्ने गर्नु हुँदैन । यसैगरी कसैलाई सम्मान, पदवी आदि दिनु पर्दा वा केही कुराको शिलान्यास, उद्घाटन आदि गर्नुपर्दा पनि औचित्य र स्तर हेरी आफैं जाने वा आफू मातहतका कर्मचारीलाई खटाउने गर्नु पर्दछ । सबैतिर मर्यादा नाघेर आफैं दगुर्ने गर्नु हुँदैन ।



## स्त्रीबालवृद्धैः सह न वदेद्धर्मनीतिकृत्यानि ॥७॥

स्त्री, बालक र ज्येष्ठ नागरिकसँग धर्म, नीति, कर्तव्य र अकर्तव्यका सम्बन्धमा कुराकानी, विवाद वा छलफल नगर्नू ।

व्याख्या : शास्त्रले स्त्रीलाई मनमा कुरा लुकाइ राख्न नसक्ने हुनाले सजिलै विश्वास गर्न नसकिने पात्रका रूपमा व्याख्या गरेको छ । स्त्रीको स्वभाव स्थिर हुँदैन, प्रशंसाप्रिय हुन्छन् र सजिलै कसैमाथि विश्वास खोल्न पुग्दछन् । बालकमा कर्तव्य, अकर्तव्य आदि केलाउने ज्ञानको विकास भइसकेको हुँदैन । ज्येष्ठ नागरिकहरूमा सामान्यतः शारीरिक र मानसिक रूपमा संसारप्रति वैराग्य उत्पन्न भइसकेको हुन्छ । यसैले यी तीन थरी मानिससँग राजकाज सम्बन्धी गम्भीर बहस नगर्नू भनिएको हो । अपवादमा कुनै स्त्री, बालक वा वृद्धमा उपरोक्त गुण नदेखिन सक्दछ तर यसलाई सामान्यीकरण गरेर सबै त्यस्तै हुन्छन् भनी सोच्नु हुँदैन ।

## ऐन्द्रजालिकं न कुर्यात् ॥८॥

राजाले जादु, चटक आदि आदि हेर्ने वा देखाउने काम नगर्नू ।

**मन्त्रवादोत्सवौ च ॥९॥**

राजाले तन्त्रमन्त्र वा झारफुक आदि जस्ता मन्त्रवादमा तथा
अर्थ न बर्थका उत्सवमा पनि समय खेर नफाल्नू ।

**आमयविषध्वंसनानि च ॥१०॥**

राजाले रोग र विषसँग लड्न पनि समय खेर नफाल्नू अर्थात् यिसँग
आलेटाले नगरी यथाशिघ्र जुध्नू ।

**न भस्मधारणम् ॥११॥**

राजाले साधुसन्तले घसे जसरी आफ्नो शरीरमा खरानी नघस्नू ।

**नाग्निहोत्रवेदपाठादीनि च ॥१२॥**

राजाले होम, वेदपाठ आदि गर्नतिर पनि अत्यधिक समय नबिताउनू ।



**न तीर्थयात्रा ॥१३॥**

तीर्थयात्रामा पनि धेर समय खेर नफाल्नू ।

**न राजसेवा च ॥१४॥**

अरुबाट चाकडी लिन र अरु राजाको चाकडी गर्न पनि राजाले धेरै समय नबिताउनू ।

**न स्त्रीसेवा च ॥१५॥**

स्त्रीको सेवामा पनि राजाले बढी समय नबिताउनू ।

**न मद्यं पिबेत् ॥१६॥**

राजाले मादकपदार्थ नपिउनू ।

**ब्राह्मणं न हन्यात् ॥१७॥**

राजाले जतिसुकै ठूलो पाप गरेपनि ब्राह्मणलाई नमार्नू ।

**स्तेयं न कुर्यात् ॥१८॥**

राजाले चोरी नगर्नू ।

**वहु न च स्रगनुलेपौ ॥१९॥**

राजा अत्तर, चन्दन आदि सुगन्ध लेपन, माला र आभूषणमा धेर आशक्त वा लिप्त नहुनू ।

**न विषीदेत् ॥२०॥**

राजा उदास नहुनू वा पछुताएर नबस्नू ।

**न चातिकुप्येत् ॥२१॥**

राजाले धेरै रिसाउने नगर्नू ।



**अविषये लोभमदानसंज्ञम् ॥२२॥**

कुस्थान, बिनाप्रसङ्ग र कुपात्रलाई दान दिनु लोभी हुनु वा नदिनु सरह हो । दान भनेको अधिकारको परित्याग हो, त्यसैले पाउन नसकिने कुरामा लोभ गर्नु भनेको पनि दान नदिनु सरह हो ।

**केदारे बीजानि वापयेत् ॥२३॥**

खनजोत गरिएको उर्बर भूमिमा खेती गर्नू ।

व्याख्या : उर्बर भूमिमा घर बनाउने अनि त्यही घरको कौशीमा कौशी-खेती गर्ने नीति बनाउने आदि जस्ता लक्षण विनाश हुने लक्षण हुन् ।

**दानं कर्त्तव्यम् ॥२४॥**

सत्पात्रलाई दान दिने कामलाई कर्तव्य ठान्नू ।

## तदसहिष्णुता लोभः ॥२५॥

दान दिने कार्यमा सहन नसक्ने हुनु भनेको लोभी हुनु हो ।

## स्तेयं लोभश्च ॥२६॥

चोरी गर्नु पनि लोभ नै हो ।

## स्वद्रव्यव्ययहेतुः कामः ॥२७॥

आफ्नो धन सही कुरामा खर्च गर्नू जसबाट सुख एवं शान्ति पाइयोस् । आफूले कमाएको कुरा जेजसो गर्न खर्च गरिन्छ त्यसैलाई “काम” भनिन्छ ।

## गुरुदेवप्राज्ञनृपादिहिंसाबुद्धिः क्रोधः ॥२८॥

गुरु, देवता, विद्वान, राजा आदिमाथि हिँसा गर्ने बुद्धि पलाउनु भनेको क्रोध हो ।



## स्वशिरस्ताडनञ्च ॥२९॥

आफ्नै टाउकोमा आफैंले हिर्काउनु पनि क्रोध हो ।

## बलादिषु च समं शत्रुं युद्धेन हन्यात् ॥३०॥

बल आदिमा आफूसमानका शत्रूलाई युद्धमा मार्नू ।

## अन्याभियोधी सामदानभेदमायोपेक्षादिभिः ॥३१॥

अन्य विरोधीहरूलाई साम, दान, भेद, माया, उपेक्षा आदि उपायले तह लगाउनू ।

## मलवेषं न कुर्यात् ॥३२॥

मैलो (वा पुरानो वा नसुहाउने) वस्त्र नलगाउनू ।

## मृगयातिसङ्गं च नाचरेत् ॥३३॥

शिकार खेल्ने बानी धेरै नगर्नू ।

## स्त्रीष्वतिसङ्गादयशो वर्धते ॥३४॥

स्त्रीसँगको अती सङ्गतिले बदनामी फैलन्छ ।

## आयुश्च क्षीयते ॥३५॥

आयु पनि खिइन्छ ।

व्याख्या : संसारको जुनसुकै कुनाको जुनसुकै समाजमा बसेपनि आफू बसेको समाजभन्दा बाहिर अर्को समाज हुन्छ भनी सोच्नु पर्दछ । भ्रम हुन्छ नै । बिरामी भएर अस्पताल पुगेको व्यक्तिलाई संसारमा सबै रोगी नै रोगी मात्र छन् कि जस्तो लाग्दछ । कुनै मठ, मन्दिर, चर्च, गुम्बा वा मस्जिद धाउन बानी लागेको व्यक्तिलाई संसारभर सबै धर्मात्मा नै धर्मात्मा रहेछन् जस्तो लाग्दछ । राजनीतिज्ञलाई आफू अगिल्तिर जम्मा भएको भीड सबै आफ्नै समर्थक हुन् जस्तो लाग्दछ । माफियाको समूहमा फसेको व्यक्तिले संसार नै माफियाले चलाइरहेको छ भनी ठान्दछ । घाटमा गयो मानिस वैरागी हुन्छ । फेरी डिस्को क्लबतिर जान्छ अनि उ फेरी मोजमस्ती पो जिन्दगी रहेछ, सबै यसो गर्दा रहेछन्, भन्ठान्दछ । जे कुरा पनि सीमामा रहेर गर्नु पर्दछ । अति गर्नू तर अतिसार नगर्नू भनिन्छ । जसले आफूलाई वा आफू बसेको समाजलाई अर्कोको वा अर्को समाजको नजरले हेर्न जान्दछ उही सुखी र शान्त हुन सक्दछ । स्त्री-सङ्गका विषयमा पनि यही कुरा बताउन खोजिएको हो । “अरुले के भन्दछ मतलब नगर्नू” भन्ने सोच सधैं सही हुँदैन । यसले पतनतिर लैजान्छ किन कि कुनै दिन अनजानमा वा जानाजान भीरतिर जाँदापनि “त्यता भीर छ, लडिन्छ, नजा” भनी दिने पनि कोही हुँदैन । आहार, मैथुन र निद्रा सामान्य कुरा हुन् । यिनलाई लत बनाउनु हुँदैन ।



## द्यूतपरतापपरापवादपातकिसमागमे समन्त्रपदानि परच्छिद्राणि विद्याव्यसनपरिहास्येन ॥३६॥

जुवाडे, अरुलाई दुःख दिने, अरुलाई निन्दा गर्ने र पतितको सङ्गत गर्नेहरूको बोलीबचनबाट, अन्य बानीव्यहोराबाट र तिनले गर्ने ख्यालठट्टाबाट सत्य कुरा पत्ता लाग्दछ । यिसँगबाट गोप्य कुराको जानकारी प्राप्त गर्नू ।

## औषधोपयोगविण्मूत्रविसर्जनकस्नानदन्तधावनमैथुनोपभोगदैवतपूजापि रहस्येन ॥३७॥

औषधी सेवन, मलमूत्रको विसर्जन, स्नान, दन्तधावन,
मैथुन र देवपूजा अरुले नदेख्ने गरी गर्नू ।

**वृथा धर्मध्वजिनं न विश्वसेत् ॥३८॥**

धर्मढोँगी वा आडम्बरीहरूमाथि विश्वास नगर्नू ।

**निन्देन्न च ॥३९॥**

तिनलाई निन्दा पनि नगर्नू ।

**उन्मत्तजडादीन् दृष्ट्वा न हसेच्च ॥४०॥**

पागल, मूर्ख आदिलाई देख्दा नहाँस्नू ।

**तुल्यशीलवयोभिः क्रीडितव्यं रहस्ये ॥४१॥**



समान आनीबानी र उमेर भएकाहरूसँग गोप्यस्थलमा खेलबाड गर्ने गर्नू ।

**गजाश्वक्रीडे व्यक्ते न द्विमूर्तम् ॥४२॥**

हात्ती वा घोडामा चढेर खेलिने खेल सार्वजनिकरूपमा (धेरै जना सहभागी भई) खेल्नू ।
फरक फरक जनावरसँग वा दुई जनामात्र सहभागी भएर यस्ता खेल नखेल्नू ।

**दूषयेन्न च स्वजातिजीवत्सु ॥४३॥**

आफूजस्तै जीवित कुनै जीवलाई पनि हानी नपुर्‍याउनू वा अरुको
निन्दा नगर्नू वा आफ्नालाई नचाहिँदा आरोप नलगाउनू ।

**अर्थेनानुरागेणाभिजन्मनौदार्येण पूर्वैर्भविष्यैरधिकत्व इच्छा कर्त्तव्या ॥४४॥**

हरेक व्यक्तिले धनले, अनुराग (प्रेम वा प्रसन्नता) ले, कुलिनता (पद, मान, प्रतिष्ठा आदि) ले र
उदारताले आफ्ना पूर्खालाई भविष्यमा जित्ने चाहना गर्नू ।

## पूर्वाचरितं धर्ममनुजीविसख्यममात्यज्ञातिसुहृद्बान्धवान् समं पश्येत् ॥४५॥

परम्परागत धर्मकर्म गर्नमा तथा आश्रित जन, मित्रजन, मन्त्री-भारदार, दाजुभाई, बन्धुबान्धव र हितैषीप्रति समान व्यवहार गर्नू ।

## बहिररन्तर्दण्डदानावनुजीविषु ॥४६॥

आश्रितजनप्रति बाहिरी र भित्रीरूपमा अनि दण्ड र उदारता (दान) मा पनि समान व्यवहार गर्नू ।

## सामभेददानानि मन्त्रिषु ॥४७॥

मन्त्री वा भारदारहरूप्रति पनि सम्झौता (साम), विवाद (भेद) र उदारता (दान)मा समान व्यवहार गर्नू ।

## सामभेददानार्थमायपिण्डानि ज्ञातिषु ॥४८॥



बन्धुबान्धवप्रति सम्झौता (साम), विवाद (भेद) र उदारता (दान) मा असमान व्यवहार नगर्नू ।

व्याख्या: कुनै व्यक्तिले गरेको कुनै अपराध, हिँसा, अनैतिक कार्य र गैर कानुनी कार्यलाई हेर्ने मानिसको दृष्टिकोणमा भिन्नता हुनु हुँदैन । हामी अदालतले दोषी करार दिइसकेका व्यक्तिलाई पनि राजनैतिक वस्त्र ओढाएर चोख्याउन खोज्दछौं । एउटै व्यक्तिलाई छिनमा ईश्वर त छिनमा राक्षस बनाउँदछौं । यसबाट हामी स्वतन्त्र होइन कि पराधीन सोचको शिकार भइरहेका छौं भन्ने कुरा प्रमाणित हुने गर्दछ । कुनै चोर आदिले जबसम्म उचित दण्ड भोग्दैन, प्रायश्चित गर्दैन, तबसम्म उ चोर आदि नै रहन्छ । मुख्य कुरा त गल्ती गर्ने व्यक्ति पछुताउनु पर्दछ, तर यहाँ यस्तो देखिन्न । आजभोली मानिस बजारमा लगेर आइसक्रिम खुवायो भने चोरलाई पनि काँधमा बोकेर “जिन्दावाद” भन्दै हिँड्न थाले । कुनै पनि अपराध व्यक्ति अनुसार, समय अनुसार वा भूगोल अनुसार सुकृत्य हुन सक्दैन । अपराध सापेक्ष वा निरपेक्ष हुँदैन । अपराधलाई हेर्ने दृष्टिकोण र अपराधीलाई दिइने दण्डमा विभेद हुनु भनेको राज्यपतनको शुरुवात हुनु हो ।

## अप्रियमपि वचनं शृणुयात् ॥४९॥

अप्रिय लागेपनि अरूका कुरा धैर्यतापूर्वक सुन्ने गर्नू ।

व्याख्या : गजब देखिन्छ आजकल । आफू प्रतिकूलका एक शब्द पनि सुन्न नसक्ने खालका तोरीलाहुरेहरुलाई हामी आफ्ना आदर्श नेता, धर्मगुरु आदि मानिरहेका छौँ ।

**दुर्दिनग्रहवैषम्यत्रिजन्मनक्षत्रे गुरुकार्यप्राप्तौ न च मङ्गलानि सेवेत ॥५०॥**

खराब दिन, खराव ग्रहको संयोग र तीन जन्म नक्षत्र (सायद आफ्नो, बाको र हजूरबाको) मा महत्वपूर्ण वा गम्भीर मङ्गलकार्यमा सहभागी नहुनू (नगर्नू) ।

**एकदेशैकरूपिणीमभिजातं स्त्रियं गमयेत् ॥५१॥**

आफ्नै देशकी, समान रूपरङ्गकी कुलिन स्त्रीसँग विवाह गरी समागम गर्नू ।

**अतिभेदयन्नातिसामं नातिदानं न च स्त्रीषु दण्डो न च मायोपेक्षा कर्तव्या ॥५२॥**

पत्नीप्रति धेरै चिढिने, धेरै लचकदार हुने र धेरै उदार हुने नीति नलिनू । उनलाई सामान्य परिस्थितिमा कडा दण्ड दिने, धेरै माया गर्ने र धेरै उपेक्षा गर्ने काम नगर्नू ।



**तासु न बहु वदेत् ॥५३॥**

तिनीहरु (स्त्री) सँग धेरै कुराकानी पनि नगर्नू (विश्वास नखोल्नू) ।

**ग्रामयाचकस्तुतमागधवन्धिनटनर्तक्युपाध्याया-**
**सत्यवादबटुविटवणिजगोपालवेश्याकुनृपेक्ष्वनृताडम्बरं वक्तव्यः ॥५४॥**

गाउँलेको उजुरी हेर्ने व्यक्ति, भाग्यवादी, भाट, नटुवा र नर्तकी एवं तिनका गुरु, फटाहा वा विदूषक, आलाकाँचा ठिटा वा बालक, कामुक व्यक्ति वा नाठो वा जार वा धूर्त, ब्यापारी, गोठालो, वेश्या र दुष्ट राजालाई सही कुरा नबताउनू, बहाना बनाउनू ।

**सन्न्यासं नृपवेश्यामन्त्रवादोपजीविष चिरं न सेवेत ॥५५॥**

राजा, वेश्या र तन्त्रमन्त्र गर्ने उप-पेसा भएका व्यक्तिसँग (धामी, सेवक आदिसँग) धेरै बेर नबस्नू ।

व्याख्याः- उल्लेखित व्यक्तिहरूसँगको अधिक सामिप्यताले व्यवहार विग्रन्छ । यिसँग गरिने लामो समयको उठबसले कुनै बेला ज्यान नै जान पनि सक्दछ । जोसुकै वा जेसुकैको गरिए पनि गृहस्थका लागि कसैप्रति वा कुनै कुराप्रति गरिने अति विश्वास वा अति सङ्गतले मानिसलाई गृहस्थधर्मबाट पतित गराउँदछ । विश्वास आफ्नो शुद्ध आत्माको गर्नू, अरु कसैको होइन ।

**आत्मप्रभुं सेवेत ॥५६॥**

मनैदेखि ईश्वरको सेवा गर्नू (वा आत्मज्ञानीहरूको सङ्गत गर्नू)।

**आयत्यादीनति न ॥५७॥**

भाग्य (आयति) आदिमा धेरै भर नपर्नू वा अति विश्वास नगर्नू ।

**स्त्रीद्यूतपानसक्तान्न सेवयेत् ॥५८॥**

स्त्री, जुवा र मदिराको कुलत हुने व्यक्तिलाई राजाले आफ्नो सेवामा नराख्नू (वा यिनको सङ्गत नगर्नू)।



**पञ्च नाडिका इष्टदेवताजपादि पञ्चनाडिकायामतीतायामास्थानम् ॥५९॥**

हरेक दिन दुई घण्टा इष्टदेवताको जप आदि गर्नू । दुई घण्टा बितेका कुरा मनन गर्दै बिताउनू ।

व्याख्या : नाडिका भनेको आधा मुहूर्त हो । दुई घडी वा अठचालीस मिनेटको समयलाई एक मुहूर्त भनिन्छ ।

**दश नाडिका विधिः पञ्च नाडिकाः स्नानम् ॥६०॥**

चार घण्टा विधिविधान बनाउन वा न्यायका लागि समय दिनू । दुई घण्टा नुहाउन खर्च गर्नू ।

**त्रिनाडिका भोजनम् ॥६१॥**

खाना खान आदिमा एक घण्टा बाह्र मिनेट बिताउनू ।

**पञ्चनाडिका हास्यक्रीडा स्निग्धैः ॥६२॥**

दुई घण्टा हाँसख्यालमा बिताउनू ।

**द्विनाडिका सन्ध्या ॥६३॥**

अठचालीस मिनेट सन्ध्याकर्ममा बिताउनू ।

**सप्त नाडिका नृत्तादयः ॥६४॥**

दुई घण्टा अठचालीस मिनेट नाचगानमा बिताउनू ।

**सप्त नाडिका मैथुनभोजनादयः ॥६५॥**

दुई घण्टा अठचालीस मिनेट मैथुन र खानपिनमा बिताउनू ।

**सप्त नाडिका सुप्तिः ॥६६॥**

दुई घण्टा अठचालीस मिनेट सुत्नू ।



व्याख्या : “नाडिका घडि इति भाषा”, नाडिकालाई चलनचल्तीको भाषामा घडि भनिन्छ- शब्दकल्पद्रुमः, एक दिनमा साठी घडि हुन्छ, एक नाडिकामा आधा मुहूर्त वा चौबीस मिनेट हुन्छ । अरु कुराका लागि छुट्याइएको समयभन्दा पनि चौबीस घण्टाको दिनमा बाह्र घण्टाभन्दा पनि बढी सुत्न चाहने वर्तमान युगका मानिसलाई एक दिनमा जम्मा दुई घण्टा अठचालीस मिनेट सुत भन्दा पच्दैन नै । तर त्यसबेलाका मानिसमा यी कुरा व्यावहारिक थिए होलान्, त्यसैले त लेखिए ।

**स्वनियमं कुर्यादप्रमादेन ॥६७॥**

गतिछाडा नभई आफ्ना नियम पालना गर्नू ।

**अश्वनियामक इव ॥६८॥**

घोडचढीले (लगाम मार्फत घोडालाई वशमा पारे) जसरी नै
आफ्ना इन्द्रियलाई मनको लगामले नियन्त्रण गर्नू ।

**शिरःकम्पनास्थानेन स्वागतेन शिष्टताम्बूलदानेन ब्राह्मणोत्तमान् ॥६९॥**

उत्तम ब्राह्मणलाई शिर भुकाएर वा हल्लाएर, स्वागतसत्कारले,
शिष्टाचारले र पान आदिले पूजा गर्नू ।

**दुर्ब्राह्मणं शिरःकम्पेन न सोपायामपि ॥७०॥**

पतित ब्राह्मण उपहार बोकेर सामुन्ने आए पनि टाउको नभुकाउनू ।

**समानप्रभुं विश्वेश्वरं वा स्वागतेनासनेन शिरःकम्पेन**
**ताम्बुलदानेन हास्यकथया च ॥७१॥**

आफू सरहको वा चक्रवर्ति राजा आए आसन दिएर, शिर भुकाएर, पान
आदि दिएर तथा मन्दमुस्कानले स्वागत गर्नु पर्दछ ।

**स्मितेन स्वागतेनास्यास्त्रैवर्णिकान् ॥७२॥**

अरु तीन वर्णका व्यक्तिलाई मन्द मुस्कानले स्वागत गर्नु पर्दछ ।



**ईक्षणस्मितेन स्वागतेन शूद्रान्न ॥७३॥**

आँखा जुधाएर र मिठो वचनले शूद्रको स्वागत गर्न हुन्न ।

व्याख्या : कुनै प्रतिमा अन्तिमको “न” अक्षर हटाएर अर्थ लगाइएको छ । शूद्रको अर्थ जे बुझिने गरिएको छ त्यो मात्र होइन, किन कि ब्राह्मणका कुलमा जन्मिएको व्यक्ति पनि ब्राह्मणोचित कर्म नगर्दा शूद्र हुन पुग्दछ ।

**अभीष्टद्रव्यदानेन वालवृद्धादीन् ॥७४॥**

मनपर्ने खालका वस्तु दिएर बालक, वृद्ध आदिलाई स्वागत गर्नुपर्दछ ।

**अन्यपाषण्डादीन् वाङ्मात्रेणापि न ॥७५॥**

अरु पाखण्डी आदिलाई भने वचनले पनि स्वागत गर्न हुन्न ।

व्याख्या : वेदमार्ग परित्याग गरी अरु मत ग्रहण गर्ने वा वेदविरुद्ध आचरण गर्ने व्यक्तिलाई पाखण्ड भनिन्छ ।

## कार्यगुरुतयाऽनुगच्छेत् ॥७६॥

गुरुजन आदिका उत्तम कार्यको अनुसरण गर्नु पर्दछ ।

## अल्पं वदेच्च योगं दद्यात् ॥७७॥

कम बोल्ने र सहयोगी हुने गर्नु पर्दछ ।

## वर्णिकापरिग्रहं न कुर्याद्रहस्ये ॥७८॥

सुनको जलप लगाइएका कुरा गोप्य तरिकाले लिन हुँदैन ।

## कर्मकारान्प्रति योगिनपि कार्यमविचारयेत् ॥७९॥



काम गरिरहेका कामदारका अगाडि तिनको कामको गुणदोषका बारेमा विचार गर्नु हुन्न (तिनलाई अरुका अगाडि गाली वा प्रशंसा नगर्नू) ।

## स्निग्धैः सह समानं वर्येन्मन्त्रित्वे ॥८०॥

समान उमेरका मन्त्रीहरूप्रति समान व्यवहार गर्नुपर्दछ ।

## अन्त्यजं त्वनन्त्यजातिनम् ॥८१॥

अन्त्यज (शूद्र भन्दा तल्ला वर्णसङ्कर जाति) माथि अन्त्यजको व्यवहार गर्नु पर्दछ ।

व्याख्या : रजकश्चर्मकारश्च नटो बूरुड एव च । कैवर्तमेदभिल्लाश्च सप्तैता चान्त्यजातयः ॥ -रजक, चर्मकार, नट, बूरुड, कैवर्त, मेद र भिल्ल : यी सात अन्त्यज हुन् :- शब्दकल्पद्रुमः ।

## अन्त्यजानां स्वार्थानिवेदकत्वमाज्ञाकर्त्वं च ॥८२॥

अन्त्यजहरूले तिनका आफ्ना स्वार्थ भुली आज्ञापालन गर्ने छने भनी आश गर्नू ।

**तन्नातिलालयेत् ॥८३॥**

तर तिनलाई धेरै पुल्पुल्याउनु भने हुँदैन ।

**न विश्वसेच्च ॥८४॥**

तिप्रति धेरै विश्वास पनि पनि नगर्नू ।

**सर्वं ज्ञात्वा न कुर्यात् ॥८५॥**

सबै कुरा थाहा भएपनि अकस्मात् कुनै कार्य नगर्नू ।

**धर्मगुप्तिः गृहयात्रागुप्तिः कार्यगुप्तिः वैरगुप्तिः यशोभङ्गे सत्यमपि नेति वदेत् ॥८६॥**

गरिएको, गरिरहिएको वा गरिने धर्मलाई; घर तर्फको वा विदेशतिरको यात्रालाई, कार्यलाई र शत्रु वा शत्रुतालाई गोप्य राख्नू । आफ्नो मान हानी वा इज्जतमा धक्का लाग्ने कुरा भए साँचो नै भएपनि पलाक्दै नहिँड्नू ।



**चिकित्सकज्योतिषमन्त्रवादिनः सङ्ग्रहेत् वृत्तशीलसम्पन्नान् ॥८७॥**

सदाचारी एवं दक्ष चिकित्सक, ज्योतिष र धामीको आवश्यक पर्दा तुरुन्त उपस्थित हुन सक्ने गरी गाँसबासको चाँजोपाँजो मिलाउने गर्नुपर्दछ ।

**सत्यमपि दुखानर्थसाधनमपि न वदेत् ॥८८॥**

सत्य कुरा नै भएपनि धन कमाउँदा वा अरु कार्य गर्दा पाइएको दुःख वा असफलता अरुलाई नबताउनू ।

**पञ्चविंशतिवर्षं यावत् क्रीडाविद्यां व्यसनात् कुर्यात् ॥८९॥**

पच्चीस वर्षसम्म खेलकूद (सिक्न रमाउन) र अध्ययन गर्नू ।

**अथ उत्तरमर्थार्जनम् ॥९०॥**

यसपछि पैसा कमाउनतिर लाग्नू ।

**आत्मानमनृणी कुर्यात् ॥९१॥**

आफूलाई ऋणमुक्त बनाउनू ।

**ऋणवाञ्जायते त्रिभिः कामक्रोधलोभैः ॥९२॥**

काम, क्रोध र लोभले गर्दा नै मानिस ऋणमा डुब्ने गर्दछ ।

**शरीरं सर्वदा रक्षेच्च ॥९३॥**

आफ्नो शरीरलाई सदैव रक्षा गर्नू ।

**नित्यकर्म न त्यजेत् ॥९४॥**

नित्य कर्म गर्न नछाड्नू ।



**जनघोषे सति क्षुद्रकर्म न कुर्यात् ॥९५॥**

बहुमत वा लोकलज्जाको ख्याल गरी तुच्छ काम गर्न छाड्नू ।

**नष्टे न स्थातव्यम् ॥९६॥**

विनाशमा स्थिर नहुनू ।

व्याख्या : असफलता वा हानीनोक्सानीबाट निराश भई टोलाएर बस्ने नगर्नू । पुनः सफल हुन अग्रसर हुनू ।

**दूरपरिहरणीयं गुरुतरमपि तद्राज्यकार्यम् ॥९७॥**

कठिन र दुःसाध्य भएपनि राजकाजको भार बोकी रहनू ।

**कुसुमान्तान् दण्डनायकान्नवान्न सेवेत ॥९८॥**

नयाँ दण्डाधिकारी वा सेनापति जो कुसुमान्त (मुस्लिम ?) छन् तिनको विश्वास नगर्नू ।

**अल्पहानिः सोढव्याः ॥९९॥**

थोरै नोक्सानी भएपनि त्यसको क्षतिपूर्ति व्यहोर्नु पर्दछ ।

**यथा मातङ्गचोरव्यालसर्पव्याघ्रकुलं विपिने श्मशाने वसति तस्मात्परमनागसां ज्ञातिवैरं न कर्तव्यम् ॥१००॥**

जसरी हात्ती, चोर, सिंह, सर्प र बाघका समूह जङ्गलमा वा मसानमा (बेग्लाबेग्लै) बस्दछन् (त्यसैगरी बस्नू) जातिगत शत्रूता नगर्नू ।

**एकामिषश्वानवत् राज्योपप्लवे तद्राज्यक्षेत्रम् ॥१०१॥**

एउटा मासुको टुक्रा दिएर कुकुरलाई पन्छाएर छाडे जस्तै विद्रोह भई सम्प्रभूता नष्ट हुन लागेको राज्य वा क्षेत्रलाई त्याग्नू ।



**नीतिः किल नदीतीरतरुवत् ॥१०२॥**

नीति भनेको नदी किनारको रुख जस्तै हो ।

**तन्नेहितव्यम् ॥१०३॥**

यसैले यसको धेरै चिन्ता नगर्नू वा प्राप्तिको धेरै चाहना नगर्नू ।

**भूतद्रोहिणः कुसुमान्तादयः ॥१०४॥**

कुसुमान्त (जात विशेष ?) आदि प्राणीमात्रका शत्रू (द्रोही) हुन्छन् ।

**यशोवीर्यायुःश्रीरतिकसामन्तसेवा ॥१०५॥**

कीर्ति, वीर्य, आयु, श्री आदि कुरा कुसुमान्तको अति सेवाबाट नष्ट हुन्छ ।

**कामक्रोधमदमात्सर्यपैशुन्यादीन्न कार्येत् ॥१०६॥**

यौन लिप्सा, क्रोध, घमण्ड, डाढ, पछिल्तिर कुरा काट्ने आदि जस्ता काम नगर्नू ।

**अरिः शुभशीलो मित्रम् ॥१०७॥**

शत्रुमध्ये असल चरित्र भएको शत्रु मित्र समान हुन्छ ।

**सुहृदशुभशीलः शत्रुः ॥१०८॥**

मित्रमध्ये खराब चरित्र भएको मित्र शत्रु (समान) हुन्छ ।

**चन्द्रादित्ययोरेकरुचित्वाच्छत्रुत्वम् ॥१०९॥**

चन्द्रमा र सूर्यका बीचमा एउटै कुरामा समानता (प्रकाश) भएका कारण शत्रुता हुन्छ ।



**यदि चेन्न स्थितिस्तयोः ॥११०॥**

यसो नहुँदो हो त दुबै सँगै बस्ने थिए ।

**ज्ञातिषु यत्र वैरं तत्कुलद्वयमामूलं नश्यति ॥१११॥**

जहाँ स्वजाति (वा कुल) मा शत्रुता हुन्छ, त्यहाँ दुवै कुल (वा जाति) समूल नाश हुन्छन् ।

**यः शास्त्रं दण्डनीतिं परित्यजत्यनर्थकः शलभा इव वह्निं प्रविशत्यज्ञानात्,**
**इत्याह भगवानाचार्यः सुरेन्द्रगुरुः ॥११२॥**

जो दण्डनीतिलाई लत्याएर मनलाग्दी गर्दछ उ बत्तीमा स्वेच्छाले पुतली नष्ट भएझैं नष्ट हुन्छ ।
यी कुरा देवगुरु बृहस्पतिले इन्द्रलाई बताउनु भयो ।

॥ इति बार्हस्पत्यसूत्रे प्रथमोऽध्यायः ॥१॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्रको पहिलो अध्याय पूर्ण भयो ।



# ॥ अथ द्वितीयोऽध्यायः ॥
# (दोश्रो अध्याय)

## गुणवतो राज्यम् ॥१॥

गुणीले नै राज्य चलाउन सक्दछ । (सार्वभौमिकताले नै राज्यलाई समृद्ध बनाउँदछ) ।

## विद्यागुणोऽर्थगुणः सहायगुणाश्च ॥२॥

साथै, विद्या, धन र असल सहयोगीले गर्दा पनि राज्य सञ्चालनमा सहजता हुने गर्दछ ।

## स्वकुलरञ्जनञ्च चारित्ररक्षणम् ॥३॥

आफ्नो कुलको रक्षा (माया) गर्नु भनेकै आफ्नो चरित्रलाई रक्षा गर्नु हो ।

## कृषिगोरक्षवाणिज्यानि ॥४॥



कृषि, गाईपालन र ब्यापार फष्टाएमा राज्य फष्टाउँदछ ।

## सर्वथा लोकायतिकमेव शास्त्रमर्थसाधनकाले ॥५॥

बेलैमा उपलब्धी पाउन (उन्नति गर्न) सधैं सबैतिर लोकायतिक-तन्त्र नै उपयोगी हुन्छ ।

व्याख्या : शब्दकल्पद्रुममा लोकायतिकको अर्थ “चार्वाक” (मत) भनी बताइएको छ ।

## कापालिकमेव कामसाधने ॥६॥

काम फत्ते गर्नलाई कापालिक मत नै श्रेष्ठ हुन्छ ।

व्याख्या:- नाक, कान, आँखा, जिभ्रो आदि इन्द्रियले गर्ने विषय भोगको चाहनालाई “काम” भनिन्छ । “कापालिक” को शाब्दिक अर्थ केलाउँदा खप्परको माला लगाउने र खप्परमै पकाएर खाने एक शैव सम्प्रदायलाई कापालिक भनिएको पाइन्छ । तन्त्रसारमा कापालिकको अर्थ वर्णसङ्कर जातिविशेष भनी लगाइएको छ भन्दछ शब्दकल्पद्रुम । वाचस्पत्यंमा अन्त्यज जाति विशेषलाई कापालिक भनिएको छ । यी अर्थ केलाउँदा कापालिक शब्दको यहाँ वर्णसाङ्कर्यता अर्थ लगाउनु उपयुक्त हुने देखिन्छ किन कि कामसुखका लागि अहिलेको

युगमा विश्वभर वर्णसङ्करता नै सबभन्दा उत्तम सामाजिक व्यवस्था देखिएको छ । कतै घोषितरूपमा त कतै स्वःस्फूर्तरूपमा समाज विस्तारै वर्णसङ्करप्रिय हुँदै गएको छ । तर निर्णयमा पुग्न हतार नगर्नू, तल कुरा धेरै पढ्न बाँकी नै छन् ।

## आर्हतं धर्मे ॥७॥

धर्मका लागि जैन धर्म उपयोगी छ ।

## सर्वथा लोकायतिकमसेनार्थं क्षिप्रं नश्यति तत् ॥८॥

सधैं चार्वाक मत सफल हुँदैन । सेना बाहेकमा यो मत चाँडै नष्ट (वा असफल) हुन्छ ।

व्याख्याः- कडा कानुन र स्व-अनुशासन नभएका स्थानमा चार्वाक मत टिक्दैन ।

## कापालिकार्हतबौद्धाश्च ॥९॥

यही कुरा कापालिक, जैन र बौद्ध मतका विषयमा पनि लागु हुन्छ ।



## एतेषु तिष्ठन् शलभवह्निवत् ॥१०॥

(अन्धाधुन्ध नपढी नबुझी) यी चार मतको अनुशरण गर्नेहरू
बत्तीमा पुतली नष्ट भएजसरी नष्ट हुन्छन् ।

## फलानि श्रोत्रसलिलकल्पानि ॥११॥

यी मतबाट पाइने उपलब्धी कानमा हालिएको पानीजस्तै
एकैछिनमा बिलाउने वा क्षणिक हुन्छन् ।

## अविद्यायुक्तः पुरुषार्थं साधयितुं धर्मयुक्ते यदिच्छति तदा लोकायतिकाभिधानपाषण्डी ॥१२॥

जब नपढेको व्यक्तिले पुरुषार्थ (यस जन्ममा गरिने कर्मसाधना) का लागि कुनै धार्मिक (पढेको) व्यक्तिको सरह चाहना गर्दछ तब उसलाई "कापालिक" नामको पाखण्डी भनिन्छ ।

व्याख्याः- "पा" भनेको पालना गर्नु हो भने "खण्ड" भनेको त्यसलाई खण्डन गर्नु वा भत्काउनु हो । पा लाई खण्ड गर्नु अर्थात् मनलाग्दी गरी परम्परागत धर्मलाई वा त्यसको मर्मलाई बङ्ग्याउनु वा अरु धर्म ग्रहण गर्नु वा ढोँग गरी धर्मलाई वृत्ति (मागी खाने भाँडो वा पेसा) बनाउनु वा धर्म नै नमान्नु वा धर्मको नाममा धोकाधडी गर्नु पाखण्ड हो । जसले यस्तो कर्म गर्दछ उसलाई पाखण्डी भनिन्छ ।

## यदा चण्डालः उदारसुरामांसादिकामेच्छुस्तदा कापालिकाभिधानपाषण्डी ॥१३॥

यदि कुनै चण्डाल प्रशस्त मात्रामा मासु र मदिराको चाहना गर्दछ भने त्यसलाई कापालिक पाखण्डी भनिन्छ ।

व्याख्याः- चण्डाल शब्दको अर्थ विभिन्न हुन्छन् । बाउन्नी आमा र शूद्र पिताबाट जन्मेको सन्तान, कुमारीबाट जन्मेका सन्तान, सगोत्रीबाट जन्मेका सन्तान, जातिच्युत मानिस र कामले मोहित भई व्रतभङ्ग गर्ने मानिसलाई चण्डाल भनी परिभाषित गरिएको छ । चण्डाल जौको पेटझैं उठेको पेट भएका, मसिनो घाँटी, कैला आँखा, थेप्चो वा चुच्चो नाक एवं कालो र गनाउने शरीर भएका हुन्छन् समेत भनिएको छ ।

## यदा सन्ध्योपासनाद्यग्निहोत्रादि च परित्यज्याहिंसाधर्मेच्छुः तदा क्षपणकपाषण्डी ॥१४॥

जुन मानिसले नित्य गर्नुपर्ने सन्ध्यावन्दन, उपासना, होम आदि नगरी अहिंसावादी धर्मको पालना गर्ने चाहना गर्दछ त्यसलाई "क्षपणक" पाखण्डी भनिन्छ ।

व्याख्याः क्षपणकको अर्थमा निर्लज्ज, नाङ्गै बस्ने जैन साधु र बौद्ध सम्प्रदायको भिक्षुक भनी उल्लेख गरिएको छ ।

## यदा वेदोक्तकर्मज्ञानं सर्वेश्वरं शिवं विष्णुं श्रियमपि परित्यज्य सर्वं शून्यमिति वदति तदा बौद्धाभिधानपाषण्डी ॥१५॥

जो वेदले बताएका कर्म, ज्ञान, सबैका ईश्वर शिव, विष्णु र लक्ष्मीलाई त्यागी सबै थोक शून्य मात्र छ भन्दछ उसलाई "पाषण्डी बौद्ध" भनिन्छ ।

## वृथा धर्मं वदत्यर्थसाधनं लोकायतिकः पिण्डादयश्चोर इति च ॥१६॥

चोरलाई पिण्डदान गर्नु व्यर्थ भएजस्तै चार्वाक मतमा धन कमाउन धर्म गर्नु व्यर्थ हुन्छ ।

**सर्वमर्थार्थं करोत्यग्निहोत्रसन्ध्याजपादीन्॥१७॥**

यस्ताले होम, सन्ध्यावन्दन, जप आदि सबै पैसाका लागि गर्दछन् ।

**स्वदोषं गूहितं कामार्थं वेदं पठति॥१८॥**

सय आफ्नो दोष (पाप) लुकाउने ध्येयले वेदपाठ गर्दछन् ।

**अग्निहोत्रादीन् करोति॥१९॥**

होम हाल्ने आदि गर्दछन् ।

**सुरापानार्थमहिलामेहनार्थं करोति॥२०॥**

मदिरा पिउन र महिलालाई यौनशोषण गर्न उसले यी सब काम गर्दछ ।

**विष्ण्वादयः सुरापानिन इति कापालिकाः॥२१॥**



कापालिकहरू विष्णु आदि देवताले पनि सुरापान गर्ने हुनाले हामी पनि त्यस्तै हौं भन्दछन् ।

**धर्मार्थं मलपिण्डधारणाद्धर्मं वदति क्षपणकः॥२२॥**

क्षपणक धर्मका लागि मलपिण्ड (नरमुण्ड माला ?, मास्क वा कम्बल वा कूचो बोक्नु ?) लगाउनु धर्म हो भन्दछन् ।

**शिवादय इति वदति क्षपणकः॥२३॥**

ती, शिव भगवान्ले पनि यस्तै मुण्डमाला लगाउनु हुन्थ्यो (त्यसैले हामीले पनि लगाएको हो) पनि भन्दछन् ।

**परापवादार्थं वेदशास्त्रधर्मादीन् पठति॥२४॥**

अरुका तर्कलाई खण्डन गर्न यी वेद आदि शास्त्र पढ्ने गर्दछन् ।

व्याख्याः शैव मतसँग जोडिएका प्रसङ्ग आएका हुनाले यो शब्दले अघोर सम्प्रदायलाई भन्न खोजिएको हो कि जस्तो देखिन्छ ।

**सर्वान्निन्दति ॥२५॥**

क्षपणकले (अन्य) सबैको आलोचना गर्दछ ।

**महेश्वरविष्ण्वादीनपि ॥२६॥**

शिव, विष्णु आदिलाई निन्दा गर्दछ ।

नोटः- यहाँ आएर हेर्दा फेरी क्षपणक शब्दले शिवलाई मान्ने अघोरपन्थीलाई भन्न नखोजिएको ज्ञात हुन्छ किन कि अघोरपन्थीले शिवलाई निन्दा गर्दैनन् ।

**सोऽप्यशनार्थं धर्मं वदति ॥२७॥**

यिनले जे भन्दछन् त्यो आफ्नो पेटपूजा गर्नका लागि भन्ने गर्दछन् ।



**वदनार्थं परान् स्तौति स बौद्धः ॥२८॥**

पेटपूजाका लागि जसले अरुको स्तुति गर्दछ त्यो बौद्ध हो ।

**लौकायतिको मृतो भवत्यर्थकामधर्ममोक्षविहीनो नारकी च ॥२९॥**

चार्वाक मत मान्नेलाई मृत्युपछि अर्थ, काम, धर्म र मोक्ष केही पनि प्राप्त हुँदैन, नरकमा पर्दछ ।

**कुले च तत्कुलं तत्पुत्रपौत्रान्तरे विनश्यति ॥३०॥**

पछि त्यसका छोरा, नाती र कुल (सबै) नाश हुन्छन् ।

**कापाली स्वग्रामगृहस्वजनैः परित्यक्तः सर्वलोकनिन्दितो नारकी भवति ॥३१॥**

कापालिक (वर्णसङ्कर) पनि आफ्नो गाउँ, घर र आफन्तबाट तिरस्कृत
भई लोकबाट निन्दित हुन्छ र मरेपछि नरक जान्छ ।

**तस्मिन्काल एव कुलं विनश्यति ॥३२॥**

उसको कुल पनि तत्क्षण नाश हुन्छ ।

**क्षपणकः स्वकुलग्रामवासिभिर्निन्दितो भवति, त्रिकुलं विनश्यति ॥३३॥**

क्षपणक पनि आफ्नो कुल र गाउँलेबाट अपहेलित हुन्छ, उसका तीन वटै कुल नाश हुन्छ ।

**बौद्धसञ्चितं कुलं पुत्रपौत्रकाले वा विनश्यति सुदुष्टो नारकी ॥३४॥**

बौद्धको पनि कमाएको कुलको मानप्रतिष्ठा छोरानातीका पालामा
गएर सकिन्छ, त्यो दुष्ट पनि नरकमा पर्दछ ।

**एवं पाषण्डिसंपर्कं मनसाऽपि न कुर्यात् ॥३५॥**

यसैले मनले पनि पाषण्डीसँग सम्पर्क नबढाओस् ।



**सुव्यवस्थितमन्त्रेण परच्छिद्रज्ञानिना धार्मिकेण राज्यं परिपालयितुं न शक्यते ॥३६॥**

मन्त्रज्ञ, परछिद्रान्वेषी र धार्मिक व्यक्तिले पनि राज्य चलाउन सक्दैन ।

**ऐश्वर्यमदमत्तेन सलोभमानिना सञ्चितं विनश्यति ॥३७॥**

सम्पत्तिको धाक लगाउने, लोभी र घमण्डी शाषक भए समृद्ध देश पनि नष्ट भएर जान्छ ।

**कार्यं निश्चित्य विषयाननुभवति यः स उत्तममर्थं साधयति ॥३८॥**

जसले सोचविचार गरी कर्म गर्दछ उसले राम्ररी धन कमाउँदछ ।

**चेष्टया कार्यज्ञान्यर्थपर इति धर्मवानिति च लोकैर्यथा न ज्ञायते तथा कर्त्तव्यम् ॥३९॥**

राजाले काम गर्दा लोकनिन्दा नआउने गरी वा लोकलाई प्रत्यक्ष असर नपर्ने गरी काम
गर्नुपर्दछ, ता कि उसका कारमकारवाहीले “यो राजा त खूब आस्तिक वा

नास्तिक छ" भन्ने भ्रम लोकलाई नपरोस् ।

**ईश्वर इव चन्द्रादित्याविव ॥४०॥**

राजाले ईश्वर, चन्द्रमा र सूर्यले जसरी केही आश नगरी जनताको सेवा गर्नु पर्दछ ।

**स्वामिचित्तानुवृत्तिभिर्मत्यैक्यकारकर्मैव मन्त्रम् ॥४१॥**

राजाले विभिन्न मत भएका मानिसलाई आफ्नो मतमा सहमत गराउन जमघट गराउनु भनेकै सभा वा बैठक बस्नु हो ।

**मन्त्रिणा स्वामिनोऽभिमतमुत्सृज्य कार्यं वक्तव्यम् ॥४२॥**

राजाको सभा वा बैठकमा सहभागी हुनेहरूले राजालाई मन पर्ने मात्र होइन मन नपर्ने विषयवस्तु पनि उठाउनु पर्दछ ।

**नीतेः फलं धर्मार्थकामावाप्तिः ॥४३॥**



नीतिको उद्देश्य धर्मव्यवस्था कायम गर्नु, धन कमाउने उचित वारावरण तयार गर्नु र कमाएको धन उचित कुरामा खर्च गर्न सिकाउनु हो ।

**धर्मेण कामार्थौ परीक्ष्यौ ॥४४॥**

गरिने खर्च र कमाइने धनको धर्मले परीक्षा गर्नू ।

**धर्मं धर्मेण ॥४५॥**

धर्मले धर्मको परीक्षा गर्नू ।

**अर्थमर्थेन ॥४६॥**

धनले धनको परीक्षा गर्नू ।

**कामं कामेन ॥४७॥**

कामले कामको परीक्षा गर्नू ।

**मोक्षं मोक्षेण ॥४८॥**

मोक्षले मोक्षको परीक्षा गर्नू ।

**गुरुशासनं कार्यमेव विरुद्धं धर्मेणापि पाण्डवविवाह इव, अर्जुनस्य सन्न्यास इव, व्यासविधवागमनमिव, कर्णोत्पादनमिव, राममातृवधमिवेत्यादि ॥४९॥**

धर्मविरुद्ध नै भएपनि गुरुको आज्ञा पालना गर्नू । जसरी पाण्डवले माता कुन्तीको आदेश पालना गर्दै द्रौपदीलाई बाँडेर लिए, जसरी अर्जुनले एक एक वर्षसम्म पालैपालो द्रौपदीसँग दरबारमा बस्न पाउने नियम तोड्दै गाईको रक्षार्थ हतियार लिन दरबार पसेर बाह्र वर्ष वनवास गए, जसरी आमाको आज्ञा मान्दै व्यासले विधवासँग सहवास गरे त्यसरी नै तथा मन्त्रको प्रयोग गर्न खोज्दा कर्णको जन्म भए जसरी र परशुरामले पिताको आदेश अनुसार आमालाई मारे जसरी नै गुरुको आज्ञा पालना गर्नू । आदि ।



**नीतिवियुक्तः पुत्र इव शत्रुः ॥५०॥**

नीतिविरुद्ध जाने पुत्र शत्रुसमान हुन्छ ।

**बालं दुष्टं साहसिकमज्ञातशास्त्रमन्त्रे न प्रवेशयेत् ॥५१॥**

बालक, दुष्ट, निष्ठुर कर्म गर्ने र शास्त्र एवं मन्त्र नजान्ने व्यक्तिलाई सभा वा बैठकमा सहभागी नगराउनू ।

**मूढाः दुराचारास्तीक्ष्णाः आत्मबुद्धयः क्षिप्रक्रुद्धाः बाला मन्त्रयोग्या न ॥५२॥**

मूर्ख, दुराचारी, हिंस्रक, विचारशून्य, चाँडै रिसाउने र बालक पनि सरसल्लाहका लागि योग्य हुँदैनन् ।

**सर्वरत्नान्यपि दीयन्दां स्वकार्यजीवयशोरक्षणे ॥५३॥**

भएभरका रत्न आदि दिएर भएपनि आफ्नो कार्य, जीवन र यश जोगाउनु पर्दछ ।

**मन्त्रकाले न कोषयेत् ॥५४॥**

बैठकमा छलफल गर्दा रिसाउनु हुँदैन ।

**धर्मप्रधानं पुरुषार्था न ॥५५॥**

यो शरीरले गर्ने कर्ममा धर्म नै मुख्य कर्म हो । धर्म प्रधान हुन्छ कर्म होइन ।

**अधर्मेण भुज्यमानं सुखमसुहृत् ॥५६॥**

अधर्मपूर्वक गरिने सुख भोगले भलो गर्दैन ।

**स्थितिवर्धनम् ॥५७॥**

उपलब्धी जोगाउनु पनि बढाउनु सरह हो ।



**अपथ्यभोजनो मृत्युप्रीतिकर इव सत्यव्रतः शास्त्रेषु निष्ठितः पुरुषः सागरमपि शोषयेत् ॥५८॥**

बैगुन गर्ने कुरा खानु भनेको मृत्युको प्रिय हुनु हो । जो व्यक्ति सत्य र शास्त्रीय निष्ठामा कट्टर हुन्छ उसले समुद्र पनि सुकाइ दिन सक्दछ ।

**क्रुद्धो यदि हतपौरुषास्त्रस्ता भवन्ति ॥५९॥**

यदि यस्ता निष्ठावान् व्यक्ति रिसाए भने तिसँग पुरुषार्थहीन व्यक्ति तर्सिने गर्दछन् ।

**एक एव वहून् दुर्जनो नाशयति ॥६०॥**

एउटै दुर्जनले धेरैलाई नाश गर्दछ ।

**पौरुषे निष्ठितो देवो ॥६१॥**

भाग्य पुरुषार्थमा टिकेको हुन्छ ।

**यस्य स्वदाररतिः यस्याात्मदमने शक्तिस्तेन सदृसो न ॥६२॥**

जसको आफ्नै पत्नीसँग मात्र रमाउने आदत हुन्छ र जो आत्मसंयमी छ,
उ समान कोही पनि हुँदैन ।

**सज्जनो न भयाद् व्यतिवर्तते ॥६३॥**

सज्जन भयबाट विचलित हुँदैन ।

**तस्मिन्काले हितमवक्तव्यमवाक्यज्ञैः सुहृद्भिः ॥६४॥**

त्यसबेला आफन्तले उसलाई हीतका कुरा गरी विचलित पार्नु
हुँदैन (सही कुरा बोल्न वा गर्न दिनु पर्दछ) ।

**उत्सिक्तहृदयं धर्मे चलितगौरवमजितात्मानं शासितुं नोत्सहेत ॥६५॥**



(उत्सिक्त=चञ्चल, क्रोधी) मन चञ्चल हुनेले, धर्ममा अभिमान गर्नेले र आत्मसंयमता
नहुनेले शासन गर्न (राजनीति गर्न) नखोज्नू ।

**दारुणकर्मभिः श्रान्तमज्ञाननिद्रया सुप्तं धर्मवाक्यानिलैः
शीतैर्बालिशं प्रबोधयेत् ॥६६॥**

कठोर कर्मले थकित भएका र अज्ञानरूपी निद्रामा सुतेका मानिसलाई धार्मिक वाक्यरूपी चिसो
एवं बलियो (बालिशम्) हावाले बिउँझाउनु पर्दछ (यिनलाई धार्मिक ज्ञान दिनू) ।

**दुर्जनमध्ये सूर्यवत् प्रकाशते सुजनः ॥६७॥**

दुर्जनहरूका बीचमा सज्जन सूर्यझैं प्रकाशित हुने गर्दछ ।

**अधर्मव्यवस्थितान्न्यायवृत्तेन वारयेत् ॥६८॥**

अधर्मतिर लाग्नेलाई न्याय (कानुन) ले रोक्नु पर्दछ ।

## अधर्मं नार्जयेत् ॥६९॥

अधर्म नकमाउनू ।

## अकीर्तिं नार्जयेत् ॥७०॥

बदनाम नकमाउनू ।

## न मारयेत् ॥७१॥

हिंसा नगर्नू ।

## बोलाः निवार्यतां धर्मपाठाङ्कुशेन गजा इव ॥७२॥

हात्तीलाई अङ्कुशले नियन्त्रण गरेजसरी धार्मिकताले
कुमार्गमा हिँड्नेलाई नियन्त्रण गर्नु पर्दछ ।



## गुरुवचनमलङ्घनीयं नयानुगतं चेत् ॥७३॥

नीति अनुकूलका गुरुका वचनलाई उल्लङ्घन गर्नु हुँदैन ।

## गुरुमपि नितिवियुक्तं निरासयेत् ॥७४॥

नीतिविरुद्ध भए गुरुलाई पनि परित्याग गर्नु पर्दछ वा उनका कुरालाई खण्डन गर्नुपर्दछ ।

## गुरुराहेति ॥७५॥

बृहस्पतिले यी कुरा बताउनु भयो ।

॥ इति बार्हस्पत्यसूत्रे द्वितीयोऽध्यायः ॥२॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्रको दोश्रो अध्याय पूर्ण भयो ।



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)

### जितक्लेशस्य पौरुषम् ॥१॥

जसले रिसलाई जित्न सक्दछ (नियन्त्रण गर्न सक्दछ) उसैले पुरुषार्थ गर्न सक्दछ ।

### देशान्तरवासेन जितक्लेशो भवति ॥२॥

विदेश गएर बस्नाले वा वासस्थान परिवर्तन गर्नाले पनि रिसलाई नियन्त्रण गर्न वा दुःख कम गर्न सकिन्छ ।

### सर्वबलकालदेशसामप्रकृतिसहायामवयसां ज्ञानं कार्यम् ॥३॥

शक्ति, समय, देश, कुरा मिलाउने वा शान्तिस्थापना गर्ने तरिका, सहयोगी र उमेरका बारेमा सबै ज्ञान हासिल गर्नुपर्दछ ।



### उपवासादिसहिष्णुत्वञ्च ॥४॥

भोकतिर्खा सहन सिकाउने उपवास आदि तरिका र मेलमिलापका बारेमा पनि ज्ञान लिनु पर्दछ ।

व्याख्याः- शरीर वा इन्द्रियलाई सुखसँग मात्र होइन दुःखसँग पनि अभ्यस्त (एडजस्ट) हुने बानी बसाल्नु पर्दछ । टन्न खान मात्र होइन पेट भोको राख्न पनि सिक्नु पर्दछ । मनोरञ्जन गर्न मात्र होइन ध्यान गर्दै शान्त बस्न पनि सिक्नु पर्दछ । आयुर्वेदले पनि सुखको मात्र चाहना र उपभोग गर्ने मानिस निश्चितरूपमा रोगी नै हुन्छ भन्दछ । निजी हेलिकप्टर हुन्छ तैपनि विदेशीहरु महिनौंसम्म दुःखपूर्वक यताउता पैदल घुम्न रुचाउँदछन् । हामी दश मिनेट पनि हिँड्न नपरे हुन्थ्यो भन्ने हालतमा पुग्यौं । हामी, हाम्रा शास्त्रका नाम सुन्न नै नचाहने बनाइयौं । तर, त्यही शास्त्र प्रकारान्तरले हामीभन्दा बढी पढेका र अहिले हामीलाई पढाइरहेका विदेशीबाट नै भएपनि केही त राम्रा कुरा हामीले पनि सिक्न सके हुने हो ।

### सुगन्धवासान् कोशान् कुर्यात् ॥५॥

भण्डारगृह सफासुग्घर राख्नू ।
(लाक्षणिक अर्थः- बदनाम वा अलोकप्रिय नहुने गरी राजकोष बढाउनू) ।

**बहुवादं मधुरमेव कुर्यात् ॥६॥**

धेरै बोल्ने आदत भएपनि प्रिय कुरा मात्र बोल्ने गर्नू ।

**श(स)मबुद्धीन् मणीन् सर्वान् सदाराधयेत् ॥७॥**

इमानदार एवं श्रेष्ठ सबै मानिसहरूलाई राम्रोसँग आदर गर्नू ।

**नवानि मन्त्राणि विद्यात् ॥८॥**

नयाँ नयाँ कुराका विषयमा जानकारी लिई छलफल गरि रहनु पर्दछ ।
(वा नयाँ नयाँ मन्त्रको ज्ञान हासिल गर्नू)

**त्रिविधानि शाक्ता वैष्णवा शैवानि तत् प्रभिन्नानि ॥९॥**

शाक्त, वैष्णव र शैव तथा तिनका सम्प्रदाय गरी तीन किसिमका बेग्लाबेग्लै मन्त्र हुन्छन् ।



**मोक्षपुर्याः द्वारं त्रयम् ॥१०॥**

मोक्षका ढोका पनि तीन वटै हुन्छन् ।

**शाक्ता वैष्णवाः शैवाः ॥११॥**

(ती मोक्षका ढोका) शाक्त, वैष्णव र शैव हुन् ।

**पोतयानमार्गवच्छशाक्तम् ॥१२॥**

पानीजहाजको जस्तो बाटो शाक्तको हुन्छ ।

**महापथवद्वैष्णवम् ॥१३॥**

राजमार्ग जस्तो बाटो वैष्णवको हुन्छ ।

**केवलप्रधानिकमश्वरथयानवत् ॥१४॥**

शैवको बाटो बग्गी वा रथको बाटो जस्तो हुन्छ ।

**लोकायतिकक्षपणकबौद्धादि बहुशार्दूलदुष्टमृगाकीर्णशून्याटवी गुहामार्गवत् ॥१५॥**

लोकायत, क्षपणक, बौद्ध आदि मतको बाटो भनेको बाघ आदि हिंस्रक जनावरले व्याप्त जङ्गलको सुरुङ्ग मार्ग जस्तो हुन्छ ।

**एतान् निरूप्यैकमाश्रयेत् ॥१६॥**

यी सबै बाटाहरूमध्ये राम्ररी सोचविचार गरेर कुनै एउटा बाटो हिँड्नु पर्दछ ।

**ज्योतिर्नाथस्थितं सदा निरूपयेत् ॥१७॥**

ईश्वरको परमज्योतिलाई सधैं ध्यान गर्ने गर्नू ।

**चातुर्वर्ण्यं रक्षेच्च ॥१८॥**



चारै वर्णको रक्षा पनि गर्नू ।

**औषधानि सेवेत च ॥१९॥**

औषधी खोज्ने, बनाउने र प्रयोग गर्ने गर्नू ।

**बलवर्णतेजोमदबुद्धिशौर्यदयावर्धनानि दोषधातुशमानि ॥२०॥**

बल, वर्ण, तेज, वीर्य, बुद्धि, पराक्रम र दया बढाउन तथा शरीरमा रहेका सात धातुलाई शान्त बनाउन वा अनुकूल परिस्थितिमा राख्न यी औषधी उपयोगी हुन्छन् ।

**दानमानालङ्कारविद्याभिः सिद्धिं लभेत् ॥२१॥**

दान, मान, अलङ्कार र ज्ञान मार्फत उद्देश्य हासिल गर्नू ।

**अष्टादश तीर्थानि निरूपयेत् ॥२२॥**

अठार थरीका तिर्थलाई अन्वेषण र विश्लेषण गरी निर्णय गर्नु पर्दछ ।

**षट्प्रकृतयस्तीर्थं शत्रुमित्रोदासीनाश्च ॥२३॥**

छ प्रकृति तीर्थ भनेका शत्रु, मित्र र सामान्य (न शत्रु न मित्र)... ।

**अन्तः शत्रुरन्तर्मित्रोऽन्तरुदासीन इति तेऽप्यनुजीविसखिसुहृदश्च ॥२४॥**

नजिकको शत्रु, नजिकको मित्र, नजिकको सामान्य हुन् । यसैगरी
यिनमा आश्रित जन, यिनका मित्र र यिनका आफन्त तथा...।

**भार्यापुत्रबान्धवाश्च ॥२५॥**

पत्नी, पुत्र र बन्धुबान्धव यी अठार तीर्थ हुन् ।

**अन्येऽपि देवालयनृत्तयागभूमिसन्ध्यावापीचतुष्पथपाषण्डालयापण-बालविद्यापाठदेशखलूरीशालीचन्द्रदर्शनाद्युत्सववेश्यागृहसमुद्रतीरयतिसंनिधिराज्यसन्धिसुराविक्रयस्थानपान्थनिवासाश्च ॥२६-२७॥**



अरु विद्वानले (१) मन्दिर, (२) नृत्यशाला, (३) यज्ञभूमि, (४) सीमा (वा घाट), (५) कुवा, (६) चौबाटो, (७) जुवाघर आदि (पाखण्डालय), (८) बजार, (९) बालविद्यालय, (१०) विद्यालय (११) खेल मैदान वा टुँडिखेल, (१२) चन्द्रदर्शन आदि जस्ता उत्सव स्थल, (१३) वेश्यालय, (१४) समुद्र किनार, (१५) कुटी वा आश्रम, (१६) देशको सीमाना, (१७) मदिरालय वा भट्टी र (१८) पाटी वा पौवालाई पनि तीर्थ बताएका छन् ।

**शृङ्गारवेषं कुर्यात् ॥२८॥**

शृङ्गारभेष गर्नू ।

व्याख्या : प्रेमिका भएका ठाउँमा जाँदा पहिरेर जाने प्रेमीको भेषलाई श्रृङ्गारवेश भनिन्छ ।

**पुरद्वारे सर्वनिरोधनं कार्य्यम् ॥२९॥**

शहरको प्रवेशद्वारमा (आउनेजाने) सबैलाई रोकी जाँचपडताल गर्नुपर्दछ ।

**सर्वान्न निषेधयेच्च ॥३०॥**

(तर पनि) सबैलाई शहर भित्र आउन नदिनु पनि हुन्न ।

**इतिहासपुराणानि मानयेत् ॥३१॥**

इतिहास र पुराणहरूलाई सम्मान गर्नू ।

**तत् पाकाँश्च ॥३२॥**

त्यसको परिणामलाई पनि सम्मान वा प्रकट गर्नू ।

**शाक्तागमाँश्च ॥३३॥**

शाक्त-आगम मतलाई पनि सम्मान गर्नू ।



व्याख्या : आगम भनेको वेदमतको अनुसरण गर्ने शास्त्र हो ।

**वैखानसागमाँश्च ॥३४॥**

वैखानस- आगम मतलाई पनि सम्मान गर्नू ।

व्याख्या : वैखानस भनेको वेदलाईभन्दा स्मृतिलाई प्रामाणिक मान्ने दशथरी वैष्णवमध्ये एक हुन् ।

**साङ्ख्याँश्च ॥३५॥**

कपिल मुनिको मतलाई पनि सम्मान गर्नू ।

**शैवाँश्च ॥३६॥**

शैव मतलाई पनि सम्मान गर्नू ।

**सर्वानपि स्वाध्यायं कुर्यात् कारयेच्च ॥३७॥**

वेद् आदि् सबै शास्त्रको राम्ररी अध्ययन र अध्यापन पनि गर्नू ।

**ब्राह्मणं न हन्याद्दोषदुष्टमपि ॥३८॥**

दोषी भएपनि ब्राह्मणलाई प्राणदण्ड नदिनू ।

**निर्दयस्य दया कर्तव्या ॥३९॥**

निर्दयीमाथि पनि दया गरिनु पर्दछ ।

**ग्रामणीन् सम्भावयेत् ॥४०॥**

गाउँका मुखियाहरूलाई पनि राम्ररी सम्मान गर्नू ।

**नगरेन्द्राँश्च ॥४१॥**

नगरप्रमुखहरूलाई पनि सम्मान गर्नू ।



**दुर्बलमपि साम कुर्यात् ॥४२॥**

निर्धोमाथि पनि सामभेद् अपनाउनू ।

व्याख्या : एकअर्काको लाभहानी देखाउनु, प्रशंसा गर्नु, आपसी सम्बन्धको फाइदा बताउनु, आम्दानीको बाटो सम्झाउनु र मिठो वचनले आश्वस्त पार्नु : यी पाँच तरिकालाई "सामनीति" भनिन्छ ।

**दानेन बहु ॥४३॥**

धेरै दान नगर्नू ।

**न स्वल्पञ्च ॥४४॥**

थोरै पनि दान नगर्नू ।

**नोत्तमेषु गुणबाहुल्यक्रमेण ॥४५॥**

अधमलाई गुण अनुसार क्रमैले दिनू । (वा उत्तमजनलाई गुणको वर्गीकरण गरेर नदिनू)

**अक्षैर्दीव्यात् ॥४६॥**

पासा वा जुवा खेल्नू ।

**नैव दीव्याच्च ॥४७॥**

तर धेरै (वा सधैं) नखेल्नू ।

**सर्पादीन् हन्यात् ॥४८॥**

सर्प आदि दुष्टलाई मार्नू ।

**उत्तमान्नानामन्त्रसिद्धान् विद्याबहुलान् द्विजान् मानयेत् ॥४९॥**

उत्तम, अनेक थरी मन्त्र सिद्ध गरेका र विद्वान ब्राह्मणलाई मान्नू ।

**अन्यराष्ट्रजान् द्विजान् क्षत्रबन्धून् कुमारसामन्तादीनात्मवत् सम्भावयेद्भोजनाच्छादनादिभिः ॥५०॥**

विदेशी ब्राह्मण, क्षेत्री, राजकुमार, सामन्त आदिलाई आफूसरह भोजन, वस्त्र आदिले स्वातसम्मान गर्नू ।

**शरणागतं सर्वपातकयुक्तमपि रक्षेत् ॥५१॥**

महापापीलाई पनि शरणमा आए रक्षा गर्नू ।

**दुष्टनिग्रहं कुर्यात् ॥५२॥**

दुष्टलाई दण्ड दिनू ।

**शिष्टपरिपालनञ्च ॥५३॥**

सज्जनलाई पालनपोषण गर्नू ।

**ग्रामं न बाधेत ॥५४॥**

गाउँलाई बाधा नहाल्नू ।

**नगरञ्च ॥५५॥**

नगरलाई पनि बाधा नहाल्नू ।

**देवालयानि च ॥५६॥**

मठमन्दिरलाई पनि बाधा नहाल्नू ।

**आसवानि सेवयेत् ॥५७॥**



(राजाले) आसव (मदिरा) को सेवन गर्नू ।

**अति न ॥५८॥**

तर, धेरै सेवन नगर्नू ।

**मांसानि च ॥५९॥**

मासु पनि खाने गर्नु तर धेर नखानू ।

**घृणा कार्या ॥६०॥**

मासुलाई घृणा पनि गर्नु पर्दछ ।

**बौद्धादयो न ॥६१॥**

बौद्ध आदिको सेवन नगर्नू ।

**अग्राह्या न ॥६२॥**

अस्वीकार (पनि) नगर्नू ।

**मत्तकाशिन्यः सेव्याः ॥६३॥**

अती राम्री कन्या सेवन (वा प्रयोग) गर्नू ।

व्याख्या : अत्यन्त राम्री, मदको नशाले लठ्ठ परेर हात्ती लस्केझैं लस्केर हिँड्ने युवतीलाई मत्तकाशिनी भनिन्छ ।

**पञ्चाशत्कोटियोजना पृथिवी ॥६४॥**

पृथ्वी पचास करोड योजनको छ ।

**सप्तद्वीपवती च ॥६५॥**

पृथ्वी सात द्वीपले पनि युक्त छ ।



**सप्तसमुद्रावृता च ॥६६॥**

पृथ्वी सात समुद्रले घेरिएको पनि छ ।

**कर्मभोगातिभोगदिव्यश्रृङ्गारसिद्धकैवल्या इति द्वीपाभिधानाः ॥६७॥**

कर्म, भोग, अतिभोग, दिव्य, श्रृङ्गार, सिद्ध र कैवल्य-यी सात द्वीपका नाम हुन् ।

**मध्यः कर्मभूमिः ॥६८॥**

पृथ्वीको बीचमा कर्मभूमि छ ।

**तन्मध्ये मेरोराजम्बूः ॥६९॥**

त्यसको पनि बीचमा मेरु पर्वत र जम्बूको रुख छ ।

**तत्रोत्तरे हिमवान् ॥७०॥**

त्यहाँ (कर्मभूमिमा) उत्तरतिर हिमालय छ ।

**तस्य दक्षिणे नवसाहस्री भू: ॥७१॥**

त्यसको (कर्मभूमिको) दक्षिणतिर नौ हजार योजनले युक्त जमिन छ ।

**तत्र दाक्षिणात्यो भारतः खण्डः ॥७२॥**

त्यहाँ दक्षिणतिर भारतखण्ड छ ।

**तत्र साक्षाद्धर्माधर्मफलाः सिध्यन्ति ॥७३॥**

त्यहाँ धर्म र पापको फल जस्ताको तस्तै पाइन्छ ।

**तत्र दण्डनीतिः ॥७४॥**



त्यहाँ दण्डनीति छ ।

**पूर्वभारतीयैः पठितव्या भविष्यैर्वर्तमानैश्च चातुर्वर्णिकैश्च ॥७५॥**

(त्यो भारतवर्षको दण्ड आदि नीति) विगत, वर्तमान र भविष्यमा पनि चारै वर्णका मानिसहरूका लागि पठनीय छ ।

**दण्डनीत्या भगवान् भानुर्नृपतिः ॥७६॥**

राजा दण्डनीतिका दृष्टिले भगवान् सूर्य समान हुन्छ ।

**वायुश्च सर्वे देवाश्च ॥७७॥**

राजा वायु र सबै देवता समान पनि हुन्छ ।

**जन्तवश्च ॥७८॥**

राजा सबै जीव समान पनि हुन्छ ।

**सहस्रयोजना बदरिकासेत्वन्ता ॥७९॥**

बदरिकाश्रमदेखि रामसेतुसम्म एक सहस्र योजन छ ।

व्याख्या : सामाजिक सञ्जालमा यो दूरी ३,१३३ देखि ३,२५६ कि.मि. सम्म र एक योजनमा १२ देखि १५ कि.मि. सम्म हुने बताइएको छ । यसरी सहस्र योजन भन्नाले १२ हजारदेखि १५ हजार कि.मि. हुन पुग्दछ ।

**द्वारकादिपुरुषोत्तमसालग्रामान्ता सप्तशतयोजना ॥८०॥**

द्वारकाबाट सालग्राम (उडिसा) सम्मको दूरी सात सय योजन छ ।

**तत्रापि रैवतकविन्ध्यसह्यकुमारमलयश्रीपर्वतपारियात्राः सप्तकुलाचलाः ॥८१॥**

त्यहाँ पनि रैवतक, विन्ध्य, सह्य, कुमार, मलय, श्रीपर्वत र पारिजात गरी सात पर्वतश्रृङ्खला छन् ।



**गङ्गासरस्वतीकालिन्दीगोदावरीकावेरीताम्रपर्णीघृतमालाः कुलनद्यश्च ॥८२॥**

गङ्गा, सरस्वती, कालिन्दी (यमुना), गोदावरी, ताम्रपर्णी (तामिलनाडुको एक नदी) र घृतमाला (केरलाको एक नदी) नामका प्रमुख नदी पनि छन् ।

**अष्टादश विषयाश्च ॥८३॥**

अठारवटा ठूलठूला प्रदेश वा राज्य पनि छन् ।

**अष्टादशसागराः नृपाः ॥८४॥**

अठार वटा ठूला ताल (वा सागर) सहितका राज्यका राजा छन् ।
(समुद्री क्षेत्रमा अठार राजा छन्) ।

**अष्टादश पार्वतीयाः ॥८५॥**

पर्वतीय क्षेत्रमा अठार राजा छन् ।

**रामसृष्टिश्चत्वारिंशच्छतं दक्षिणोत्तरे आसह्यं द्वादश विश्वामित्रसृष्टिरेकादश ॥८६॥**

रामले सृष्टि गरेको भूभाग उत्तरदक्षिण सह्य पर्वतसम्म ४ हजार योजनको १२ वटा छ भने विश्वामित्रले सृष्टि गरेको भूभाग ११ वटा छ ।

**नेपालं चतुःशतम् ॥८७॥**

नेपाल एक सय चार योजन (१,२४८-१,५६० कि.मि.) को छ ।

**पूर्वसमुद्रतीरे वरुणतः समुद्रान्तमष्टयोजना ॥८८॥**

पूर्वीसमुद्रको तीरमा वरुणदेखि समुद्रको अन्तसम्म आठ योजन छ ।

**पञ्चशतद्वितयमुत्तरलाटं पूर्वलाटञ्च ॥८९॥**



पूर्वलाट र उत्तरीलाट पाँच पाँच सय योजनका छन् ।
(लाट : वर्तमान समयको भारतभित्र पर्ने गुजरात, बडोदा वा अहमदावाद मध्ये कुनै एक प्रदेश) ।

**काशीपञ्चालद्वितयमशीतिः ॥९०॥**

काशी र पाञ्चाल (पञ्जाब) दुबै अस्सी अस्सी योजनका छन् ।

**केकयसृञ्चयं षष्टिः ॥९१॥**

केकय (काश्मीर प्रदशेमा पर्ने प्राचीन देश) र सृञ्चय साठी योजनका छन् ।

**मात्स्यमागधं शतम् ॥९२॥**

मात्स्य (विराट) र मागध (दक्षिणी बिहार वा कीकट देश) सय योजनका छन् ।

**मालवशाकुन्तमशीतिः ॥९३॥**

मालव (वर्तमान भारतमा रहेको मध्य प्रदेशको पश्चिमी भाग तथा राजस्थानको दक्षिण-पूर्वी भाग । अहिलेको मालवा प्रान्त भित्र त्यसबेला मालव र अवन्ति नामका दुई देश थिए) र शकुन्त (?) अस्सी योजनका छन् ।

**कोसलावन्तिः षष्टिः ॥९४॥**

कोसल (वर्तमान भारतको गोरखपुर नजिकैको प्राचीन देश) र अवन्ति साठी योजनका छन् ।

**सैह्य वैदर्भद्वितयं शतद्वितयम् ॥९५॥**

सैह्य (केरलाको दक्षिणी भाग) र विदर्भ (भारतको बरार आसपासको एकप्राचीन देश) दुई सय योजनका छन् ।

**वैदेहकौरवं शतम् ॥९६॥**

विदेह (मिथिला वा जनकपुर राजधानी भएको एक प्राचीन देश) र कुरु (दिल्ली, हरियाणा, पञ्जाब र उत्तर प्रदेशको पश्चिमी भाग समेटिएको प्राचीन राज्य) सय योजनका छन् ।



**कम्बोजदशार्णमशीतिः ॥९७॥**

कम्बोज (वर्तमान अफगानिस्तानको कान्दहार शहरको पूर्वतिर रहेको प्राचीन देश) र दशार्ण ( भारतको मध्यप्रदेशमा आजकल धसान भनिने नदीको आसपास रहेको एक प्राचीन राज्य) अस्सी योजनका छन् ।

**एते महाविषयाः ॥९८॥**

यी ठूला राज्यहरूका नाम हुन् ।

**एते खलु चतुरश्राः ॥९९॥**

निश्चय नै यी सबै चार कुने परेका वा चारैतिर फैलिएका छन् ।

**आरट्टबाह्लीकौ दक्षिणोत्तरतः शतमात्रौ पूर्वपश्चात् द्वादशौ ॥१००॥**

उत्तरदेखि दक्षिणसम्म फैलिएका सय योजन लामा र

पूर्वपश्चिम १२ योजन चौडा आरट्ट (पञ्जाबको उत्तर-पूर्वतिर रहेको घोडाका लागि प्रसिद्ध एक प्राचीन राज्य) र बाह्लीक (आजकलको कश्मीर आसपासको एक प्राचीन देश) छन् ।

**शाकसौराष्ट्रौ चतुरश्रौ चत्वारिंशत्॥१०१॥**

शाक (गौतम बुद्ध लगायतका शाक्य वंशको देश ?) र सौराष्ट्र (अहिलेको भारतमा रहेको कठियाबादमा रहेको प्राचीन देश) चारैतिर चार सय योजन फैलिएका छन् ।

**अङ्गवङ्गकलिङ्गाः शतमात्राश्चतुरश्राश्च॥१०२॥**

अङ्ग (भारतको भागलपुर आसपासमा रहेको प्राचीन देश), वङ्ग (बङ्गाल) र कलिङ्ग (उडिसाको दक्षिण भेगमा रहेको एक प्राचीन देश) चारकुने र सय सय योजनका छन् ।

**काश्मीरहूणाम्बष्टसिन्धवः शतमात्राश्चतुरश्राश्च॥१०३॥**

काश्मीर, हूण (मङ्गोलिया आसपासको प्राचीन देश), अम्बष्ठ (पञ्जाबको मध्यभागमा रहेको एक प्राचीन देश) र सिन्ध (सिन्धु नदी आसपासको एक प्राचीन देश) चारकुने र सय सय योजनका छन् ।



**किरातसौवीरचोलपाण्ड्याः उत्तरे दक्षिणे स्थिताः शतात्परं षष्टिमात्राः॥१०४॥**

किरात (हिमालय श्रृङ्खलाको पूर्वी भागमा रहेको एक प्राचीन राज्य), सौवीर (सिन्धु नदीको छेउमा रहेको एक प्राचीन राज्य), चोल (अहिलेको कर्णाटक क्षेत्रमा रहेको प्राचीन देश) र पाण्ड्य (दक्षिण भारतको एक प्राचीन देश) उत्तरदक्षिण १६० योजनका छन् ।

**यादवकाञ्चीविषयं चत्वारिंशच्छतमात्रम्॥१०५॥**

यादव र काञ्ची (मद्रासको दक्षिण-पश्चिममा रहेको एक प्राचीन राज्य) ४० सय योजनका छन् ।

**एते उपविषयाः॥१०६॥**

यी उपराज्यहरू हुन् ।

**सप्तकोङ्कणाश्चतुश्शतमात्राः द्वादश षट्राष्टौ च॥१०७॥**

सप्तकोङ्कण (भारतको पश्चिम समुद्री तटका प्राचीन राज्य) ४२६ योजनका छन् ।

**एते अनूपाः ॥१०८॥**

यिनलाई आनूप प्रदेश भनिन्छ ।

**सह्याद्रौ चत्वारो गिरिविषयाः ॥१०९॥**

सह्य नामको पर्वत क्षेत्र (भारतको पश्चिमी समुद्र तटमा रहेको एक पर्वत श्रृङ्खला) मा चार वटा पर्वते राज्य छन् ।

**श्रीपर्वते द्वयम् ॥११०॥**

श्रीपर्वत (मद्रासमा पर्ने एक पर्वत) मा दुई..।

**रैवतक एकः ॥१११॥**



रैवत (गुजरातको एक पर्वत) मा एक...।

**विन्ध्ये पञ्च ॥११२॥**

विन्ध्य (भारतको उत्तर र दक्षिण छुट्टयाउने एक पर्वत श्रृङ्खला) मा पाँच...।

**कुमारे एकम् ॥११३॥**

कुमार (कर्णाटकमा पर्ने एक पर्वत) मा एक...।

**महेन्द्रे त्रयम् ॥११४॥**

महेन्द्र (महेन्द्राचल नामक भारतको पर्वत) मा तीन...।

**पारियात्रे त्रयम् ॥११५॥**

र पारियात्र (सिवालिक) पर्वत्र क्षेत्रमा तीन पर्वतीय राज्यहरू छन् ।

**सर्वे दक्षिणोत्तरतः पञ्चाशन्मात्राः पूर्वतःपश्चात् पञ्चयोजनाः समाः ॥११६॥**

यी सबै एकनासका दक्षिणदेखि उत्तरसम्म ५० र पूर्वपश्चिम ५ योजनका छन् ।

**म्लेच्छे यवनविषयाः पार्वतीयाः ॥११७॥**

म्लेच्छ देश (आर्यावर्त भन्दा बाहिर) मा पर्वतीय यवन राज्य छन् ।

**ग्रामनगरोद्यानादिभिरलंकृताः पुण्यक्षेत्रादिभिश्च ॥११८॥**

गाउँ, शहर, बगैंचा आदिले सुशोभित पुण्यक्षेत्रहरू पनि छन् ।

**अष्ट वैष्णवक्षेत्राः ॥११९॥**

वैष्णवक्षेत्र आठ वटा छन् ।



**बदरिकासालग्रामपुरुषोत्तमद्वारकाबिल्वाचलानन्तसिंहश्रीरङ्गाः ॥१२०॥**

ती आठ वैष्णवक्षेत्र : बदरिका (बदरीनाथ), सालग्राम (मुक्तिनाथ), पुरुषोत्तम (जगन्नाथपुरी), द्वारका, बिल्वाचल (?), अनन्त (?), सिंह (?) र श्रीनगर हुन् ।

**अष्टौ शैवाः ॥१२१॥**

शैव क्षेत्र आठ वटा छन् ।

**अविमुक्तागङ्गाद्वारशिवक्षेत्ररामेयमुनाशिवसरस्वतीमव्यशार्दूलगजक्षेत्राः ॥१२२॥**

ती आठ क्षेत्र : अविमुक्त (वाराणसी), गङ्गाद्वार (गोदावरी नदीको मुहान), शिवक्षेत्र (कैलास), रामेश्वर, यमुना, शिव-सरस्वती (?), मव्यशार्दूल (?) र गजक्षेत्र (?) हुन् ।

**शाक्ता अष्टौ च ॥१२३॥**

शाक्त क्षेत्र पनि आठ वटा छन् ।

**ओघ्घीणजालपूर्णकामकोल्लश्रीशैलकाञ्चीमहेन्द्राः ॥१२४॥**

ती आठ क्षेत्र : ओघ्घीण (?), जाल (?), पूर्ण (?), काम (कामाक्षा ?), कोल्ल (?), श्रीशैल, काञ्ची र महेन्द्र हुन् ।

**एते महाक्षेत्राः ॥१२५॥**

यी चौबीस क्षेत्रलाई महाक्षेत्र भनिन्छ ।

**सर्वसिद्धिकराश्च ॥१२६॥**

यी क्षेत्रले सबै प्रकारका सिद्धि प्रदान गर्दछन् ।

**वन्द्याश्च ॥१२७॥**



यी क्षेत्र वन्दनीय पनि छन् ।

**विन्ध्ये नित्यं वसति दुर्गा भद्रकाली च ॥१२८॥**

विन्ध्य पर्वतमा दुर्गा भद्रकाली सधैँ बसोबास गर्नु हुन्छ ।

**कुमारे कुमारो वसति नित्यम् ॥१२९॥**

कुमार पर्वतमा सधैँ कुमार बस्ने गर्नु हुन्छ ।

**सह्ये गणपतिः ॥१३०॥**

सह्य पर्वतमा गणेश बस्ने गर्नु हुन्छ ।

**रैवतके शास्ता ॥१३१॥**

रैवतमा शास्ता (गुरु, बृहस्पति ?) निवास गर्नु हुन्छ ।

**महेन्द्रे गरुडः ॥१३२॥**

महेन्द्र पर्वतमा गरुड बस्नु हुन्छ ।

**पारियात्रे क्षेत्रपालः ॥१३३॥**

पारियात्रमा क्षेत्रपाल बस्दछन् ।

**कर्मभूमौ भारते मनुष्यैर्बहवो देवाः ॥१३४॥**

कर्मभूमी भारतवर्षमा मानिसका साथै अनेकौं देवीदेवताहरू रहने गर्दछन् ।

**सुरासुरयक्षराक्षसभूतप्रेतविनायककूष्माण्डा विकृताननाः ॥१३५॥**

यहाँ देवता, दानव, यक्ष, राक्षस, भूत, प्रेत, विनायक, कूष्माण्डा, विकृतानन (?),..।

**निरुद्धाः भारवेषाः ॥१३६॥**



निरुद्धा (?), भारवेषा (?)...।

**सौम्यभैरवाः योगिन्यश्च नागाश्च मानवैः सह रूपरमा असङ्ख्याताः सञ्चरन्ति ॥१३७॥**

सौम्यभैरव, योगिनीहरू, नागहरू आदि जस्ता असङ्ख्य रूपरम (?)का मानव
सँगसँगै बसोबास गर्दछन् ।

**मानवैः कृतपालनाश्च ॥१३८॥**

त्यहाँ मानवले पाल्ने र मानवलाई पाल्ने खालका अनेक प्राणीहरू पनि बसोबास गर्दछन् ।

**तस्मिन्नमृतमया औषधाः सन्ति ॥१३९॥**

त्यस क्षेत्रमा अमृत समानका ओखतीहरू छन् ।

**अत्र युगसङ्ख्या कृतत्रेताद्वापरतिष्याश्च ॥१४०॥**

यहाँ सत्य, त्रेता, द्वापर र कलि नामका युगहरू हुन्छन् ।

**कृते ज्ञानिनः ॥१४१॥**

सत्ययुगमा मानिस ज्ञानी हुन्छन् ।

**दण्डनीति कोविदाः ॥१४२॥**

ती दण्डनीतिमा पोख्त हुन्छन् ।

**त्रेताया कर्मिणः नीतिविशारदाः ॥१४३॥**

त्रेता युगमा मानिस कर्मशील र नीति-विज्ञ हुन्छन् ।

**द्वापरेतान्त्रिकानुसाराः घनारसाश्च ॥१४४॥**

द्वापर युगमा मानिस तन्त्रमन्त्रमा लाग्ने र घनारस (?) हुन्छन् ।

**नीतिकोविदाश्च ॥१४५॥**

ती नीतिज्ञ पनि हुन्छन् ।

**तिष्ये पादे ज्ञानकर्मा घनाः दण्डनीतिकोविदा नराः ॥१४६॥**



कलियुगको पहिलो चरणका मानिस ज्ञान र कर्मलाई प्राथमिकता दिने खालका तथा दण्डनीतिमा कुशल हुन्छन् ।

**तदुत्तरं विरुद्धधर्मवर्णवेषाः दण्डनीतिवर्जिताः ॥१४७॥**

तर पछिपछि भएपछि ती धर्मविरोधी, वर्ण विरोधी, वेष विरोधी र दण्डनीति नभएका बन्न पुग्दछन् ।

**पश्यन्ति प्रजा अनृतवादतत्पराश्चेत्याह आचार्यः ॥१४८॥**

त्यसबेलाका मानिस भूटको खेती गर्नमा तत्पर भएका देखिन्छन् भनी बृहस्पतिले बताउनु भयो ।

॥ इति बार्हस्पत्यसूत्रे तृतीयोऽध्यायः ॥३॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको बृहस्पति सूत्रको तेश्रो अध्याय पूर्ण भयो ।



## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)

**ब्राह्मे मुहर्ते उत्थानम् ॥१॥**

बिहान ब्रह्ममुहूर्तमा उठ्नु पर्दछ ।

**धर्ममर्थञ्च चिन्तयेत् ॥२॥**

उठेर धर्म र धनका बारेमा चिन्तन गर्नु पर्दछ ।

**कुक्कुटशब्दं शुभम् ॥३॥**

बिहान कुखुरा बासेको सुन्नु शुभ हुन्छ ।

**गजादिदर्शनञ्च ॥४॥**



हात्ती आदि देखिनु पनि शुभ हुन्छ ।

**गजशब्दमङ्गलस्तुतिवेदपाठनञ्च ॥५॥**

हात्ती कराएको आवाज, मङ्गल स्तुति र वेदपाठ सुन्नु पनि शुभ हुन्छ ।

**देवतापुण्यकथा च ॥६॥**

देवीदेवताका पुण्य कथा सुन्नु पनि शुभ हुन्छ ।

**राजन्यस्मरणञ्च ॥७॥**

राजाहरूलाई सम्झनु पनि शुभ हुन्छ ।

**नेत्राञ्जनञ्च ॥८॥**

आँखामा गाजल लगाउनु पनि शुभ हुन्छ (लगाउनू) ।

**आदर्शदर्शनञ्च ॥९॥**

ऐना हेर्नु पनि शुभ हुन्छ (हेर्नू) ।

**अलङ्कारयेत् ॥१०॥**

वस्त्र, आभूषण आदिले गरिने श्रृङ्गारपटार पनि शुभ हुन्छ (गर्नू)

**ताम्बूलचर्वणं च ॥११॥**

पान चपाउनु पनि शुभ हुन्छ (चपाउनू) ।

**कर्पूरचन्दनागरुधूपञ्च ॥१२॥**

शरीरमा कपूर, चन्दन आदि दल्नू र शरीरलाई गोकुल धूप सुँघाउनु पनि शुभ हुन्छ (दल्नू, सुँघाउनू) ।



**शाङ्खकाहलविषाणाच्छिन्नवेणुवीणातन्त्रीमृदङ्गपणवाः ॥१३॥**

बिहान शङ्ख, तुरही (काहल), सिङ बजाएको आवाज (विषाणाच्छिन्न), बाँसुरी, वीणा, मादल र साना ढोल बजेको आवाज सुन्नु शुभ हुन्छ ।

**तूर्यघोषाञ्च ॥१४॥**

तूरही बाजा विशेषको आवाज सुन्नु पनि शुभ हुन्छ ।

**दिव्यप्रमदादर्शनञ्च ॥१५॥**

बिहान अलौकिक वा स्वर्गकी अप्सरा जस्ती सुन्दरीको दर्शन हुनु पनि शुभ हुन्छ ।

**मागधभिन्नषड्जञ्च, जातिस्वरञ्च ॥१६॥**

मागध जातिले बजाएको सङ्गीतका सात स्वर मध्येको पहिलो स्वर तथा आफन्तको स्वर सुन्नु पनि शुभ हुन्छ ।

**सर्पिषि सितपुष्पाणि, मन्त्रतृप्तो वह्निः स(श)तार्चिर्विष्णुलिङ्गधूमयुक्तो भवति ॥१७॥**

घिउ, सेता फूल, मन्त्र पढ्दै होम हालिरहिएको यज्ञको अग्नि र विष्णु वा शिवलिङ्गलाई पूजा गर्दा निस्किएको धुवाँ देख्नु पनि शुभ हुन्छ ।

**तदशुभं गवां सन्दर्शनं, गृध्रसन्दर्शनञ्च, सन्ध्याज्वलनञ्च, विरुद्धशिवादर्शनञ्च ॥१८॥**

बिहान गोरु, गिद्ध, सन्ध्याकालको आगो देखिनु र स्यालको आवाज सुनिनु अशुभ हुन्छ ।

**क्रव्यादमृगाणां शब्दो ग्रामपुरद्वारे वा श्रूयते ॥१९॥**

गाउँ वा शहरको ढोकामा काँचो मासु खाने जनावरको आवाज सुनिनु अशुभ हुन्छ ।

**देवताप्रतिमास्वेदश्च यस्मिन् दृश्यते तत्र प्रायश्चित्तमन्यत्र यानमेव, प्रतिकारो नास्ति ॥२०॥**



देवीदेवताको मूर्तिबाट पसिना निस्किएको देखिए प्रायश्चितका लागि ठाउँ सर्नू, अन्य उपाय छैन ।

**अवश्यनिपूपणीयान्येतान् कर्माणि ॥२१॥**

उल्लेखित कुराहरूलाई अवश्य ध्यान दिनू ।

**मन्त्रमूलो विजयः ॥२२॥**

जितको आधार भनेको गोप्य छलफल र योजना हो ।

**त्रिविधाः पुरुषाः उत्तमाधममध्यमाः ॥२३॥**

उत्तम, मध्यम र अधम गरी तीन किसिमका मानिस हुन्छन् ।

**मन्त्रेऽपि ॥२४॥**

मन्त्र (गोप्य छलफल) पनि तीन किसिमको हुन्छ ।

**बहुभिर्बान्धवैः हितैर्बहुश्रुतैः धीरैस्सह यत्कर्मारभते तदुत्तमम् ॥२५॥**

धेरै बन्धुबान्धव, हितैषी, ठुलठुला विद्वान र धैर्यशाली व्यक्तिहरूको उपस्थितिमा शुरु गरिने काम उत्तम हुन्छ ।

**धर्मद्विविधे गुरौ भक्तिश्च ॥२६॥**

धर्मका बारेमा दोमन भए गुरुसँग सोध्नू ।

**अर्थपरैस्सह मन्त्रयित्वा आरभते स उत्तमः ॥२७॥**

अर्थविज्ञहरूको सल्लाहमा शुरु गरिएको काम उत्तम हुन्छ ।

**गुणदोषागमं निश्चित्य मौर्ख्यबाहुल्यात् यः आरभते सोऽधमः ॥२८॥**

गुण र दोष बिचार गरी दोष बढी हुने काम जसले गर्न शुरु गर्दछ, त्यो अधम हो ।

**ऐकमत्येन दण्डनीति नेत्रेण धीरैर्मन्त्रिभिर्यो मन्त्रः स उत्तमः ॥२९॥**

दण्डनीतिका दृष्टिले त्यो निर्णय नै उत्तम हुन्छ जुन् निर्णय धैर्यशाली मन्त्रीहरूले सर्वसम्मत तरिकाले गरेका हुन्छन् ।

**पूर्वं बहुबुद्धयः पश्चादेकमतयो भवन्ति यत्र स मध्यमः ॥३०॥**

पहिले विवाद भई पछि एकमतले गरिएको निर्णय मध्यम खालको निर्णय हुन्छ ।

**यत्र कलहः भर्त्सनञ्च , एकस्य धर्मः, एकस्य अर्थः, स्त्रीवालवृद्धैस्सह एकस्य रुदितं, एकस्य क्रोधः यस्मिन् सोऽधमः ॥३१॥**

जुन कुराको छलफलमा झगडा हुन्छ, कसैले धनका र कसैले अर्थका कुरा गर्दछन्, स्त्री, बालवालिका र वृद्धजनमध्ये कोही राएको र कोही रिसाएको स्वर सुनिन्छ, त्यस्तो अवस्थामा गरिएको निर्णय अधम हुन्छ ।

**पूर्वं स्वामिना कार्यनिवेदनम्॥३२॥**

सर्वप्रथम स्वामी समक्ष कार्यका बारेमा निवेदन गर्नू ।

**पुनर्वचसा कर्मणा मनसाञ्जलिना दण्डप्रमाणेन यथागुरुत्वं स्वामिनमभिवन्दयेत्॥३३॥**

त्यसपछि मन, वचन र कर्मले रोलक्रम अनुसार नमस्कार गर्दै सबैलाई अभिवादन गर्नुपर्दछ ।

**वृद्धो वैश्रवणो वाचस्पतिर्वा यस्यान्नं भुञ्जते तं वन्देत॥३४॥**

ज्येष्ठ नागरिक, कुबेर अथवा बृहस्पति पनि जसको अन्न खान्छन् उसैको गुणगान गाउँदछन् ।



**यत्पुनः यथाक्रमं एकैकस्य मतं श्रोतव्ययम्॥३५॥**

यसपछि पालैपालो रोलक्रम अनुसार अरुहरूका कुरा वा मत सुन्नू ।

**स्वामिनं प्रसाद्य कार्यं कलपयितव्यम्॥३६॥**

स्वामीलाई सहमत बनाएर मात्र कुनै निर्णयमा पुग्नु पर्दछ ।

**पूर्वं स्वामिगुणं सङ्कीर्त्य, स्वामिदोषं परदोषञ्च मध्यस्थदोषञ्च मन्त्रयित्वा पुनः स्वामिगुणसंस्थापनं कुर्यात्॥३७॥**

सभामा पहिला स्वामीका गुणको, त्यसपछि उनको दोषको, त्यसपछि अरु (शत्रू)को दोषको, त्यसपछि मध्यस्थकतृाको दोषको र अन्तमा स्वामीका गुणको कुरा गर्नू ।

**पुनः कार्याण्युपायानि निरूप्य स्वामिनं प्रसाद्य कार्यं कल्पयितव्यम्॥३८॥**

कार्य सम्पादनका उपायका बारेमा पनि उल्लेख गरी स्वामीलाई खुशी पार्दै निर्णय गर्नू ।

**प्रमत्तेषु अभियुक्तेषु दैवोपहतेषु च न सिध्यन्ति विक्रमाः ॥३९॥**

प्रमत्त (बुद्धि स्थिर नहुने), अभियुक्त र अभागीबाट काम फत्ते हुँदैन ।

**अप्रमत्तं धर्मज्ञं जितेन्द्रियं विजिगीषुं बलिषु**
**जातकोपं दुराधर्षं प्रति विक्रमो न कार्यः ॥४०॥**

प्रमत्त नभएका, धर्मका विषयमा जानकार, इन्द्रियलाई जितेका, आफूभन्दा बलिया, रिसाएका र  दवाउन नसकिने खालका व्यक्तिमाथि तुजुक नदेखाउनू ।

**शास्त्रवित् कथं कार्यं न प्रजानातीति न वदेत् ॥४१॥**

"शास्त्रवेत्ता भएर पनि उ किन यो कुरा जान्दैन त ?" यस्तो कहिल्यै नभन्नू ।

**बलिष्ठान् शत्रून् कामादीन् ये जयन्ति ते सर्वानरीन् जयन्ति ॥४२॥**



काम आदि जस्ता शत्रूलाई जसले जित्दछ उसले सबै शत्रूलाई जित्न सक्दछ ।

**पूर्वमुपकारं न कारयेत्, उपकारं नियतं कुर्याच्च ॥४३॥**

अरुले उपकार गरि देओस् भनी चाहना राख्ने नगर्नू, सधैं अरुलाई उपकार गर्नू ।

**नाभाविव्यसनं पूर्वं ज्ञात्वा व्यसनप्रतीकारं कार्यमिति गुरूराह ॥४४॥**

आउन सक्ने सङ्कटलाई बुझी पूर्वतयारी गर्नु पर्दछ ।

॥ इति बार्हस्पत्यसूत्रे चतुर्थोऽध्यायः ॥४॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्रको चौथो अध्याय पूर्ण भयो ।



## ॥ अथ पञ्चमोऽध्यायः ॥

**चत्वारः उपायाः ॥१॥**

शत्रूलाई वशमा पार्ने (साम, दान, दण्ड र भेद) चार प्रकारका उपाय हुन्छन् ।

**त्रयश्च, मायोपेक्षा वधश्च ॥२॥**

यस बाहेक माया, उपेक्षा र हत्या गरी अरु तीन उपाय पनि हुन्छन् ।

**सूरिषु साम, शङ्कितेषु सामभेदौ, लुब्धेषु सामदानभेदाः, कष्टेषु सामभेददानमायोपेक्षावधाः ॥३॥**

विद्वानलाई सामले, शङ्कास्पदलाई साम र भेदले, लोभीलाई साम, दान र भेदले तथा खराबलाई सबै उपायले नियन्त्रण गर्नु पर्दछ ।

**साम पूर्वं प्रयोक्तव्यम् ॥४॥**



सर्वप्रथम त सामनीति नै प्रयोग गर्नु पर्दछ ।

**मनसोऽभिप्रायं वाचः प्रीतिकर्म च ॥५॥**

मन, अभिप्राय, वचन र मायाले काम फत्ते गर्नुपर्दछ ।

**ज्ञातीनां व्यसने ज्ञातयो हृष्यन्ति ॥६॥**

आफन्तहरू आफन्तको नराम्रो हुँदा खुशी हुने गर्दछन् ।

**ज्ञातिं ज्ञातयः प्रच्छन्नहृदयाः क्रूरा उपद्रवन्ति ॥७॥**

मनमा कुरा लुकाउने खालका निर्दयी आफन्तहरू अरुलाई खसाल्न भित्रभित्रै जालो बुनिरहने गर्दछन् ।

**सर्वभयेषु ज्ञातिभयं क्रूरम् (घोरम्) ॥८॥**

सबै खालका डरहरूमध्ये आफन्तको डर बढी निर्दयी हुन्छ ।

**गोषु पयः, ब्राह्मणे कोपः, स्त्रीषु चापलं दूरत्वं, ज्ञातिषु सौहृदञ्च पत्रजलबिन्दुवत् ॥९॥**

गाईमा दूध, ब्राह्मणमा रिस, स्त्रीमा चञ्चलता नहुने कुरा र आफन्तमा सहृदयता : यी कुरा कमलको पातमा टल्कने पानीका थोपा जस्तै क्षणिक हुन्छन् ।

नोट : शुरुका दुई सूत्रांशलाई छुट्टै सूत्रका रूपमा राखी कुनै कुनै प्रतिमा यसको अर्थ "गाई भित्र दूध रहेजस्तै ब्राह्मण भित्र रिस रहेको हुन्छ" भनी लगाएको पनि पाइन्छ ।

**हितं गुरुजनवाक्यं शास्त्रचोदितं च ये न श्रृण्वन्ति कालचोदिताः, (तस्मात्) तान् सुपिरहृत्य अन्यत्र वसेत् ॥१०॥**

समय परिस्थितिको वशमा परी जसले गुरु र शास्त्रका हितकारी कुरा सुन्दैन त्यस्ता व्यक्तिलाई छाडी अन्यत्र गएर बस्नू ।

**लोकविरूद्धं नाचरेत् ॥११॥**



लोकविरुद्धका काम नगर्नू ।

**मन्त्रविद्यागुह्यपदेषु ग्रहान् बान्धवान् कुशलादन्यत्र न कार्यं, व्यसनानि च ॥१२॥**

मन्त्र, विद्या र गोप्य स्थानमा साथ दिने आफन्तलाई सुख पाउँदा नबिर्सनू । कुलत नबसाउनू ।

**दुर्जनं परिहृत्य वक्तव्यं, विद्यायुक्तोऽपि गुहाहिरिव ॥१३॥**

पढेकै भएपनि गुफाको सर्प जस्तै ठानी दुर्जनसँग टाढा रहनू ।

**शत्रुपक्षादागतं न विश्वसेत् ॥१४॥**

शत्रूपक्षबाट आएको कुनै पनि व्यक्तिमाथि विश्वास नगर्नू ।

**गुणतः सङ्गृह्णीयात्, भावैः परीक्षयेत् ॥१५॥**

तर यस्ता व्यक्ति गुनिला भए भाव परीक्षण गरी विश्वास गर्नू ।

**वीरोऽसारैः सहसा न ज्ञायते, बुद्धिमविज्ञाते सहसा परीक्षयेत् ॥१६॥**

वीर र काथर फ्याट्ट चिन्न सकिन्न, चिन्न नसक्दा चाँडो परीक्षण गर्नू ।

**इङ्गितैर्ज्ञातुं शक्यते, प्रसन्नो न ॥१७॥**

कोही प्रसन्न छ कि छेन भनेर सङ्केत (हाउभाउ) बाट थाहा पाउन सकिन्छ ।

**अशङ्कितमतिः स्वस्थः, अकोपनश्च ॥१८॥**

कसैको स्वस्थता, शङ्का र रिस पनि हाउभाउबाट थाहा हुन्छ ।

**बालादयोऽपि विवृण्वन्ति हितम् ॥१९॥**

आफूलाई भलो गर्ने मानिसलाई बालकले पनि चिन्दछ ।

**स्वकुलस्य विनाशं ज्ञात्वा बुद्धिमाँस्तत्र शत्रुपक्षमपि न युक्तमाश्रयेत् ॥२०॥**



आफ्नो वंश नै नाश हुन लाग्दा पनि बुद्धिमानले शत्रूको शरण नपर्नू ।

**हृदये यथावच्छुभाशुभं पूर्वमुदेति ॥२१॥**

कसैका मनमा भएका शुभ र अशुभ कुराको लक्षण बाहिरैबाट देखिने गर्दछ ।

**न दुष्टाचारः सर्वत्र कारयेत् ॥२२॥**

कतै पनि खराब आचरण नगर्नू ।

**चपला न बहुमान्याः, इत्याहचार्यो बृहस्पतिः ॥२३॥**

चञ्चल व्यक्तिलाई धेरै पुलपुल्याउनु हुँदैन । यी कुरा बृहस्पतिले बताउनु भयो ।

॥ इति बार्हस्पत्यसूत्रे पञ्चमोऽध्यायः ॥५॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्रको पाँचौं अध्याय पूर्ण भयो ।



## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)

**देशकालयोग्यं कर्म नयानयौ च वेदयेत्, न विपरीतं वेदवीर्यदर्पेण ॥१॥**

देश र समय हेरी उचित नीति र कुनीतिका बारेमा जानकारी लिनू । तर ज्ञान र बलको घमण्डमा नीति विपरीतका कामकारवाही नगर्नू ।

**हितानि निरूपयेत् ॥२॥**

हितकर कामहरू गर्नू ।

**नवो मन्त्रिभिर्निरूप्य कारयेत् ॥३॥**

नयाँ राजाले मन्त्रीहरूको सल्लाहमा काम गर्ने गर्नू ।

**बुद्धिजीवनैरमात्यैस्सह कार्यमकार्यं च निरूपयेत् ॥४॥**



बुद्धिमान् मन्त्रीहरूको सल्लाह बमोजिम कर्तव्य र अकर्तव्यका बारेमा निर्णय गर्नू ।

**अहितं विकारं यस्य प्रतिभाति स मन्त्रयोग्यः ॥५॥**

हानीकारक विकार देखिने व्यक्ति उचित सल्लाह दिन योग्य हुन्छ ।

**अर्थमार्जयेत् ॥६॥**

धन कमाउनू ।

**यस्यार्थराशिरस्ति तस्य मित्राणि धर्मः विद्या गुणः विक्रमः बुद्धिश्च ॥७॥**

जोसँग धन हुन्छ उसैसँग मित्र, धर्म, विद्या, गुण, पराक्रम र बुद्धि हुन्छन् ।

**अधनेनार्थमार्जयितुं न शक्यते, गजोऽगजेनेव ॥८॥**

हात्तीले हात्तीलाई वशमा पारेजस्तै वा समाए जस्तै धनले धनलाई समात्दछ । धनहीनले धन कमाउन सक्दैन, कठिन हुन्छ ।

**धनमूलं जगत्, सर्वाणि तत्र सन्ति ॥९॥**

धन नै संसारको मूल हो , जहाँ धन हुन्छ त्यहाँ सबै थोक हुन्छ ।

**निर्धनो मृतश्चण्डालश्च ॥१०॥**

धन नहुने मानिस मरेको चाण्डाल समान हुन्छ ।

**एवं धर्ममूलं च विद्यामार्जयेत् ॥११॥**

अतः धर्मको मूल अर्थात् धन र विद्यालाई पहिले आर्जन गर्नू ।

**विद्यामूलमिदं जगत्, विद्यापुनस्सर्वमित्याह गुरूः ॥१२॥**

संसारको मूल विद्या हो । विद्याले सबै कुरा पाउन सकिन्छ ।
बृहस्पतिले यस्ता कुरा बताउनु भयो ।

**॥ इति बार्हस्पत्यसूत्रे षष्ठोऽध्यायः ॥६॥**



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्रको छैटौं अध्याय पूर्ण भयो ।



॥ इति बृहस्पत्यनीतिसूत्राणि समाप्तानि ॥



मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको
बृहस्पति सूत्र पूर्ण भयो ।



सबैको कल्याण होस् !